# पूर्ण प्रश्न पूर्ण उत्तर

एउटा दैवी वार्तालाप



कृष्णकृपामूर्ति
**श्री श्रीमद् अभयचरणारविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद**
संस्थापकाचार्य अन्तर्राष्ट्रिय कृष्ण भावनामृत सङ्घ

भारतका लागि पिसकोर स्वयम् सेवामा कार्यरत बब कोहनेबिचको वार्तालाप

**कृष्णकृपामय श्रीमद् अभयचरणारविन्द भक्तिवेदान्त स्वामी प्रभुपादद्वारा विरचित ग्रन्थ रत्नहरू**

१. श्रीमद् *भगवद्गीता* यथारूप
२. श्रीमद्भागवतम् स्कन्ध १-१२ (३० खण्डमा)
३. श्रीचैतन्य-चरितामृत (१७ खण्डमा)
४. लीलापुरूषोत्तम भगवान् श्रीकृष्ण
५. श्रीचैतन्य महाप्रभुको शिक्षामृत
६. कृष्णभक्तिको अनुपम उपहार
७. भक्तराज प्रह्लाद महाराजको शिक्षामृत
८. देवहुति नन्दन कपिलदेवको शिक्षामृत
९. प्रेमेमावतार भगवान् श्रीचैतन्य महाप्रभु
१०. भगवत्‌दर्शन पत्रिका (संस्थापक)
११. राजविद्या
१२. कृष्णतिर
१३. श्रीउपदेशामृत
१४. योगको पूर्णता
१५. रसराज श्रीकृष्ण
१६. भक्तिरसामृत सिन्धु
१७. पारमार्थिक प्रश्नोत्तर
१८. कृष्णभावनाको आचरण
१९. कृष्णभक्ति: सर्वोच्च योग
२०. भगवद्‌दर्शन (मासिक पत्रिका) संस्थापक

**नेपालीमा अनुवादित पुस्तकहरू**

१. श्रीमद् *भगवद्गीता* यथारूप
२. लीलापुरुषोत्तम भगवान् श्रीकृष्ण
३. जीवनबाट जीवन आउँछ
४. पूर्ण प्रश्न पूर्ण उत्तर
५. जन्म र मृत्युभन्दा पर
६. राजविद्या
७. अन्य लोकहरूको सजिलो यात्रा
८. भक्तिरसामृत सिन्धु
९. चैतन्य महाप्रभुको दिव्य उपदेश
१०. रसराज श्रीकृष्ण
११. जन्म र मृत्यु भन्दा पर
१२. हरे कृष्ण चुनौती
१३. श्रीउपदेशामृत
१४. भक्तराज प्रह्लाद महाराजको शिक्षामृत
१५. श्रीइशोपनिषद

**प्रकाशोन्मुख नेपाली अनुवादित पुस्तकहरू**

१. धर्म - उत्कृष्टताको मार्ग
२. *भगवद्गीता* सार
३. उज्वल भागवत्को प्रकाश
४. अध्यात्मयोग
५. परमानन्दको मार्ग
६. महारानी कुन्तीको शिक्षा
७. अद्‌वितीय उपहार
८. कृष्णचेतनाको वैज्ञानिक आधार
९. आत्मसाक्षात्कारको मार्ग
१०. आत्म-विज्ञान
११. योगको पूर्णता
१२. भगवान् श्रीकृष्णतर्फ उन्मुख
१३. कृष्णचेतनातर्फ उन्मुख
१४. परमेश्वरको सन्देश
१५. जपकीर्तन गरौँ र सुखी बनौँ

विस्तृत जानकारीका लागि

श्रीश्रीराधाकृष्ण मन्दिर, हरेकृष्णधाम, बूढानीलकण्ठ, पो. बा. ३५२०
काठमाडौं, नेपाल। फोन: ४३७३७८६,
इमेल:prabhupadbooknepal@gmail.com

# पूर्ण प्रश्न पूर्ण उत्तर

कृष्णकृपामूर्ति
**श्रीश्रीमद् अभयचरणारविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद**
संस्थापकाचार्य अन्तर्राष्ट्रिय कृष्ण भावनामृत सङ्घ

भारतका लागि पिसकोर स्वयम् सेवामा कार्यरत बब
कोहनेबिचको वार्तालाप



भक्तिवेदान्त बुक ट्रस्ट

यस ग्रन्थको विषयवस्तु प्रति जिज्ञासु पाठकवर्गलाई भक्तिवेदान्त बुक ट्रस्टद्वारा निम्नलिखित ठेगानामा पत्र-व्यवहार गर्नकालागि आमंत्रित गरिन्छ :

भक्तिवेदान्त बुक ट्रस्ट
हरे कृष्ण धाम
जुहू, मुंबई ४०० ०४९, भारत

वेबसाइट/ई-मेल :
www.indiabbt.com
admin@indiabbt.com

**Perfect Questions Perfect Answers (Nepali)**

1st printing : 10,000 copies
2nd printing, April 2021 : 5,000 copies



भक्तिवेदान्त बुक ट्रस्टद्वारा, प्रकाशित तथा मुद्रित

ET6N

# विषय सूची

# परिचय
# अति सहासीक शिर्षक

यो पुस्तकमा उल्लेख भएको गङ्गाको किनारामा बसेर गरिएको वार्तालापको समय पनि तीस वर्ष व्यतीत भइसकेछ। यो सर्वप्रथम १९७६ मा प्रकाशित भएको थियो र मैले पनि केही पुस्तक बाँडे। १९७२ मा मेरो "पूर्ण प्रश्न" का बारेमा भएको वार्तालापको शीर्षकको वर्णन गर्न कठिन हुँदोरहेछ। म त्यससमय बाईस वर्षको थिएँ र पूर्णताबाट धेरै टाढा थिएँ। तर, मसँग वार्तालाप गर्ने वार्ताकार श्रील प्रभुपादले शिर्षकको नाम "पूर्ण प्रश्न पूर्ण उत्तर" राख्ने सुझाब दिनुभयो। उहाँ ज्यादै नम्र हुनुहुन्थ्यो। यो सबै पूर्णता कसरी सम्भव भयो?

मेरो पुरानतवादी वा रूढीवादी जुइस वा यहुदी परिवारले भगवान्का बारेमा बुझ्ने एक प्रकारको प्रभाव स्थापित गराएको थियो। मैले रेनसेल पोलिटेक्निक इन्स्टिच्युटबाट केमेस्ट्रिमा १९७१ मा स्नातक गर्नुअघि मेरो कलेज जीवनमा आत्मसाक्षात्कार र युद्धविरोधी आन्दोलनले प्रभाव पारेको थियो। अन्तर्दृष्टिको वातावरण र विरोधी आन्दोनलका कारणले म 'हरे कृष्ण' कीर्तनले मुग्ध वा मोहित भए। मैले यो कीर्तन ग्रीनवीच गाउँमा १९६० सालको अन्ततिर सर्वप्रथम सुनेको थिए साथै भगवद्गीताको योगले पनि आकर्षित गरेको थियो।

"भगवान्सँग जोडिनु" लाई योग भनिन्छ भनेर पढेको थिएँ। योगको अवधारणाले मलाई आकर्षित गर्‍यो। साथै, त्यसले मलाई हुर्काउँदाको सिद्धान्तप्रति कुनै विरोधाभास भएन। तैपनि अमेरिकामा योगको प्रस्तुति गर्दा मलाई धेरै समस्या भयो। प्रत्येक हप्तामा न्युयोर्क डेली न्युजको मुख्य समाचार भारतीय गुरुले संसारलाई प्रबुद्ध बनाउँदै हुनुहुन्छ भनेर दावी गरेको नै हुने गर्दथ्यो। हामीले कसलाई विश्वास गर्ने? त्यसैले, मलाई यहाँबाट टाढा भारत, जुन योगको स्रोत हो, त्यहाँ जानुपर्ने आवश्यकता

देखायो। कलेजको अध्ययनपश्चात् भारतको भ्रमण गर्न पिसकोर सेवा मलाई राम्रो हुने देखे। जहाँ कार्य गरेर मैले त्यहाँका गाउँमा निवास गर्ने, भाषा सिक्ने र ठीकसँग गीता र जपबारेमा जाँच्ने सक्दथेँ।

भारत मैले सोचेजस्तो रहेनछ। सहरमा गरिबी रहेको प्रत्यक्ष देखेँ सहरमा भुन्डका भुन्ड भिखारी थिए तैपनि गाउँहरू खेतीपातीले युक्त साथै शान्त र सन्तुष्ट जनताले युक्त थिए। सर्वत्र सूक्ष्मता र दिव्यताले युक्त अवस्था थियो।

विहारमा विज्ञानको शिक्षकको रूपमा मेरो नियुक्त भएपछि मैले मन्दिर, मस्जिद र चर्चको भ्रमण गर्न प्रारम्भ गरेँ। तर, त्यो मन्त्रमुग्ध गर्ने अवस्था थिएन। त्यहाँको समूह अनुभूतितर्फ उन्मुख थिएन। उनीहरू धन, भाग्य र सम्मान चाहन्थे। १९७० तिरको टि.भी कार्यक्रमको 'अब लेनदेन गरौं" भन्ने जस्तै धार्मिक अवधारणा थियो। मैले आधा पृथ्वी जति भ्रमण गरेँ र दिल्ली पुगेँ, जहाँ भौतिक अमेरिकामा जेजे देखेको थिएँ, त्यहाँ त्यही मूल्य र मान्यता पाएँ। मैले धेरै गुरुहरूलाई भेटेँ तर म कसैबाट प्रभावित भइन।

मेरो अस्तित्व बारेको खोज धुवाँमा रूमलिएजस्तो भयो। विद्यालयको छुट्टीमा १९७२ फ्रेब्रुरअरीमा कलकत्ता गएँ। मैले ग्रीनबीच गाउँमा देखेजस्तै 'हरे कृष्ण'का भक्त नै धेरै जस्तो पश्चिमी थिए। त्यहाँ पनि कीर्तन गर्दै गरेको देखेँ। तिनीहरूले मलाई कलकत्ताबाट एक सय माइल उत्तरतर्फ न्यासका लागि हुने एकान्तवासका लागि आमन्त्रण गरे। मेरो जिज्ञासाअनुसार सही मानेर मैले त्यो स्वीकार गरेँ।

हामी बङ्गालको गाउँ वर्दन्तबाट रेल चढ्यौँ र गङ्गाको किनारमा अवस्थित सुन्दर मायापुर पुग्यौं। त्यहाँ पुगेर मैले मायापुरमा सोही एकान्तवासका लागि भर्खरै खरिद गरिएको धानखेत, जहाँ साना तम्बु र छाप्राहरू देखेँ। जे भए पनि त्यो धान खेत महान् सन्त श्री चैतन्यको पवित्र जन्मस्थल नजिकै थियो। त्यस छाप्रोभित्र वृद्ध सज्जन जसको

नाम श्रील प्रभुपाद थियो, जो अन्तर्राष्ट्रिय कृष्णभावना आन्दोलनका संस्थापक हुनुहुन्थ्यो, उहाँ बस्नुभएको थियो। उहाँका अनुयायीहरू भर्खरै भारत पाकिस्तान युद्धपश्चात् शरणार्थी भएकाहरूका लागि भोजन बनाउन व्यस्त थिए। भोजन प्रदान गर्न प्रयासरत स्वयम्सेवकहरूको पुरुष तम्बुबाट आवाज आइरहेको थियो।

त्यहाँ साठी जना जति पच्चीस वर्ष उमेरभन्दा पनि कमका अमेरिकी र युरोपेली कृष्ण अनुयायी थिए। तिनीहरू उत्साही थिए। तिनीहरूमध्ये धेरै अङ्ग्रेजी बोल्ने मसँग आफ्नो अनुभूति बाड्न उत्सुक देखिन्थे। जे भए पनि मलाई श्रील प्रभुपादसँग भेट्नका लागि आमन्त्रण गरियो र मैले पनि भारत यसैका लागि आएको हुँ भन्ने महसुस गरेँ।

अब मलाई "पूर्ण प्रश्न" को मागले असहज बनायो। भगवद्गीताले पनि अन्वेषकलाई यसरी नै चेतावनी दिएको छ।

"गुरुकहाँ गएर सत्यका बारेमा बुझ्ने प्रयास गर। उहाँको सेवा गर्दै विनम्रतापूर्वक जिज्ञासा राख। त्यस्ता तत्त्वदर्शीले सत्यका बारेमा जानेका हुनाले त्यो ज्ञान तिमीलाई प्रदान गर्नेछन्।" (४.३४)

यस निर्देश अनुसार कम अनुभव भएको व्यक्तिमा तीन वटा योग्यता हुनुपर्दछ।

१) गुरु कहाँ जानु

२) चुनौतीरहित जिज्ञासा राख्नु

३) कुनै पनि तरिकाले गुरुलाई सहायता गर्नु वा सेवा गर्नु

जब, यी सबै कुरा पुरा भएपछि गुरुले ज्ञान प्रादान गर्नुहुन्छ भनेर भगवद्गीताले सुझाव दिएको छ।

श्रील प्रभुपादलाई मैले भेट्ने भनेको उहाँसँग बहस गर्नु भन्ने होइन, केही ज्ञान पाउनु हो। स्वयम् घोषित धेरै निर्देशकहरूलाई भेटेर र उनीहरूका बारेमा पढेर धेरै नै भ्रममा परेको थिएँ, तैपनि श्रील प्रभुपादका अनुयायीहरूले ममा अभिरूचि उत्पन्न गराए।

जब मैले उनीहरूको अति जोसिलोपनलाई पार गरेँ मैले त्यहाँ योगको सही स्वाद र संन्यास वा त्यागमा भएका चित्त बुझाउन सक्ने व्याख्या पाएँ। अनि मैले आफ्नो समय श्रील प्रभुपादसँग सँगै बसेर चुनौती दिने होइन केही सिक्नका लागि बिताउने भएँ। पछि ती कुराहरू जुन मैले सुन्नेछु ती स्वीकार गर्ने वा अस्वीकार गर्ने त्यो पछि निर्णय गर्न सक्दथें।

यसरी, मैले गीताका पहिलो र दोस्रो योग्यता प्राप्त गरेँ, कृष्ण आन्दोलनले गरेको महामारी उद्धार कार्यक्रममा संलग्न भएर मैले तेस्रो योग्यता पनि प्राप्त गरेँ।

श्रील प्रभुपादको दृष्टिकोणबाट पनि गीताको आधिकारिक घोषणा पूर्ण प्रश्नको अनुगमन गरिरहेको थिएँ। त्यही समयमा श्रील प्रभुपादले गीता (४.२)ले निर्देश गरेअनुसार त्यसमा आधारित मेरा प्रश्नहरूको उत्तर दिनुभयो- यो परम विज्ञान गुरु शिष्य परम्पराअनुसार सन्त राजाहरूले सोहीअनुसार प्राप्त गरेर त्यसलाई बुझेका थिए।"

श्रील प्रभुपादले पुरातन गुरुशिष्य परम्पराअनुसार पहिलाका अधिकारीबाट जे सुन्नु भएकोथियो त्यसमा केही नथपी त्यसैका आधारमा मेरा प्रश्नको उत्तर दिनुभयो। यसरी मैले आफूमा पूर्वजहरूका विनम्र सन्देशवाहकले प्रस्तुत गरे जस्तै मेरा सम्मान पूर्वक राखिएका जिज्ञासाको उत्तर दिनुभयो।

श्रील प्रभुपादसँग सर्वप्रथम भएका मेरा वार्तालापको उहाँका सचिवले रेकर्ड गर्नुभएन। त्यसकारण, हाम्रो पुस्तक पहिलो अध्याय परिचय र शुरुवाती वार्तालापरहित भयो।

श्रील प्रभुपादसँगको मेरो वार्तालापको अध्ययनले तपाईंलाई पूर्णता तर्फ लैजान सकोस् भन्ने कामना गर्दछु।

बब कोहेन

# कृष्णः सम्पूर्ण आकर्षक

१९७२, फेब्रूवअरी २७

**बब—** कृष्ण नामको अर्थ के हो?

**श्रील प्रभुपाद—** कृष्णको अर्थ "सर्व आकर्षक" हो।

**बब—** सर्व आकर्षक?

**श्रील प्रभुपाद—** हो। यदि भगवान् सर्व आकर्षक नभए उहाँ कसरी भगवान् हुन सक्नुहुन्छ? आकर्षक भएर नै मानिस महत्त्वपूर्ण हुन्छ, होइन र?

**बब—** त्यही हो।

**श्रील प्रभुपाद—** त्यसैले, भगवान् आकर्षक हुनुपर्दछ र सबैलाई आकर्षक हुन पर्दछ। त्यसकारण यदि भगवान्का अन्य नाम छन् वा तिमीले भगवान्लाई कुनै नाम दिन चाहन्छौं भने त्यो केवल "कृष्ण" नाम दिन सकिन्छ।

**बब—** किन केवल कृष्ण नाम मात्र?

**श्रील प्रभुपाद—** किनभने उहाँ सर्व आकर्षक हुनुहुन्छ। कृष्णको अर्थ सर्व आकर्षक नै हुन्छ। भगवान्को कुनै नाम छैन, तर उहाँका गुणअनुसार हामीले उहाँलाई नाम दिन्छौं। यदि कुनै व्यक्ति सुन्दर छ भने हामीले उसलाई सुन्दर भनेर बोलाउँदछौं। यदि कुनै व्यक्ति बुद्धिमान छ भने हामीले उसलाई विद्वान् भन्दछौं। यसरी, उसको गुणअनुसार नाम राख्ने गर्दछौं। त्यसरी नै, भगवान् सर्व आकर्षक हुनुहुन्छ र कृष्ण नाम उहाँमा ठीकसँग लागु हुन्छ। कृष्णको अर्थ सर्व आकर्षक हो र यसले सबै कुरा समाहित गर्दछ।

**बब—** तर, सर्वशक्तिमान् नामको अर्थ के हो?

**श्रील प्रभुपाद—** हो, जबसम्म सर्वशक्तिमान् भइँदैन तबसम्म कोही पनि सर्वआकर्षक कसरी हुन सक्दछ?

**श्यामसुन्दर** (श्रील प्रभुपादका सचिव)— यसले सबै कुरा समेट्दछ।
**श्रील प्रभुपाद—** सबै कुरा, जस्तैः उहाँ अति सुन्दर, अति बुद्धिमान्, अति शक्तिशाली, अति प्रसिद्ध।
**बब—** के भगवान् श्रीकृष्ण दुष्टहरूका लागि पनि आकर्षक हुनुहुन्छ?
**श्रील प्रभुपाद—** हो, उहाँ सबैभन्दा दुष्ट पनि हुनुहुन्थ्यो।
**बब—** त्यो कसरी हुन सक्दछ?
**श्रील प्रभुपाद—** (हाँस्दै) किनभने उहाँले सदैव गोपीहरूलाई जिस्काउनुहुन्थ्यो।
**श्यामसुन्दर—** जिस्काउनु?
**श्रील प्रभुपाद—** हो, कहिलेकाहीँ जब राधारानी बाहिर जानुहुन्थ्यो, भगवान् श्रीकृष्णले आक्रमण गर्नुहुन्थ्यो अनि जब उहाँ लड्नुहुन्थ्यो र भन्नुहुन्थ्यो- "कृष्ण, मलाई यसरी दुःख नदिनुहोस्" उहाँहरू लड्नुहुन्थ्यो र भगवान् श्रीकृष्णले उहाँको चुम्बन लिने अवसर प्राप्त गर्नुहुन्थ्यो। (उहाँ हाँस्नु भयो) यसरी राधारानी प्रशन्न हुनुहुन्थ्यो। तर सतही तरिकाले भगवान् श्रीकृष्ण सबैभन्दा दुष्ट हुनुहुन्छ भन्ने हाम्रो सिद्धान्त छ। भगवान् श्रीकृष्णमा दुष्टता नभए त्यो यहाँ प्रकट हुन सक्दैन किनभने उहाँ सबैकुराका स्रोत हुनुहुन्छ। तर, उहाँको दुष्टता यति सुन्दर छ सबैले उहाँको दुष्टताको पूजा गर्दछन्।
**बब—** जो व्यक्ति असल छैन, उसको दुष्टतालाई के भन्ने?
**श्रील प्रभुपाद—** दुष्टता राम्रो होइन, तर भगवान् श्रीकृष्ण परम हुनुहुन्छ र उहाँ भगवान् हुनुहुन्छ। त्यसकारण उहाँको दुष्टता पनि राम्रो हुन्छ। भगवान् श्रीकृष्ण सम्पूर्णरूपले असल हुनुहुन्छ र भगवान् हुनुहुन्छ।
**बब—** हो।
**श्रील प्रभुपाद—** त्यसकारण उहाँ दुष्ट भए पनि राम्रा नै हुनुहुन्छ त्यसैले, उहाँ भगवान् श्रीकृष्ण हुनुहुन्छ। दुष्टता राम्रो होइन, तर त्यही दुष्टताको अभ्यास भगवान् श्रीकृष्णले गर्नुभयो भने त्यो पनि राम्रो हुन्छ, किनभने उहाँ परिपूर्णतम् राम्रा हुनुहुन्छ, त्यो सबैले बुझ्नुपर्दछ।

**बब—** भगवान् श्रीकृष्णलाई आकर्षक नठान्ने व्यक्ति छन्?

**श्रील प्रभुपाद—** छैनन्। सबैले उहाँ आकर्षक हुनुहुन्छ भनेर मान्दछन्। को आकर्षित भएको छैन र? एउटा उदाहरण देऊ। यो व्यक्ति वा यो प्राणी भगवान् श्रीकृष्णतर्फ आकर्षित भएको छैन, त्यस्तो कुनै व्यक्ति खोज।

**बब—** कोही जीवनमा केही गर्ने इच्छा गर्दछ, उसको अनुभूति गलत हुन सक्दछ तर जसले शक्ति वा सम्मान वा धन प्राप्त गर्न चाहन्छ, उसले भगवान्लाई आकर्षक नठान्न सक्दछ। उसले भगवान्लाई आकर्षक नपाउन सक्दछ किनभने भगवान्ले उसलाई सजाय दिनुहुन्छ वा दोषी हुँ भन्ने भावना उत्पन्न गराइदिनुहुन्छ।

**श्रील प्रभुपाद—** होइन, भगवान् होइन। उसको आकर्षण भनेको आफू शक्तिशाली बन्ने हो। व्यक्ति शक्तिशाली वा धनी बन्न चाहन्छ होइन र? तर, कोही पनि भगवान् श्रीकृष्णभन्दा धनी छैन। त्यसैले, भगवान् श्रीकृष्ण सबैका लागि आकर्षक हुनुहुन्छ।

**बब—** यदि कुनै व्यक्तिले धनी हुनका लागि भगवान् श्रीकृष्णको प्रार्थना गर्‍यो भने के ऊ धनी बन्न सक्दछ?

**श्रील प्रभुपाद—** बन्न सक्दछ।

**बब—** यो माध्यमद्वारा व्यक्ति धनी बन्न सक्दछ?

**श्रील प्रभुपाद—** हो, निश्चय नै, किनभने भगवान् श्रीकृष्ण सर्वशक्तिमान हुनुहुन्छ। यदि तिमीले धनी हुन प्रार्थना गर्‍यौं भने भगवान् श्रीकृष्णले तिमीलाई धनी बनाइदिनुहुन्छ।

**बब—** यदि कुनै व्यक्ति दुष्टतापूर्ण वा अशुभ अवस्थामा छ, तर धनी हुनका लागि प्रार्थना गर्‍यो भने के ऊ धनी बन्न सक्दछ?

**श्रील प्रभुपाद—** हो, बन्न सक्दछ, किनभने भगवान् कृष्णको प्रार्थना गर्ने दुष्ट हुन सक्दैन।

**बब—** ए त्यस्तो हो।

**श्रील प्रभुपाद—** (मुख बन्द गरेर हाँस्दै) जुनसुकै अवस्थामा पनि उसले भगवान् श्रीकृष्णको प्रार्थना गर्दछ भने तिमीले उसलाई दुष्ट भन्न सक्दैनौ।

**बब—** ए !

**श्रील प्रभुपाद—** भगवद्गीतामा भगवान् श्रीकृष्णले भन्नुभएको छः **अपि चेत्सुदुराचारो भजते मामनन्यभाक् साधुरेव स मन्तव्यः** के तिमीले यो पढेका छौं ?

**बब—** हो पढेको छु। म संस्कृत जान्दिनँ, तर अङ्ग्रेजी जान्दछु।

**श्रील प्रभुपाद—** ए !

**बब—** "यदि अति दुष्ट व्यक्तिले पनि मेरो प्रार्थना गर्दछ भने ऊ माथि चढ्दछ।"

**श्रील प्रभुपाद—** हो, जब उसले भगवान् श्रीकृष्णको प्रार्थना गर्न सुरू गर्दछ ऊ दुष्ट रहँदैन। त्यसकारण भगवान् श्रीकृष्ण सर्व आकर्षक हुनुहुन्छ। वेदमा भनिएको छ '**रसो वै सः**' अर्थात् परमसत्य वा भगवान् सम्पूर्ण आनन्दका सागर हुनुहुन्छ। प्रत्येक व्यक्ति कसै प्रति आकर्षित भएको हुन्छ किनभने उसले त्यहाँ स्वादको अनुभव गरेको हुन्छ।

**बब—** माफ गर्नुहोस्। (मैले बुझ्नँ)

**श्रील प्रभुपाद—** केही स्वाद। कुनै व्यक्ति केही पिइरहेको छ भने उसले किन केही पिइरहेको छ ? किनभने उसले त्यो पिउदा केही स्वाद प्राप्त गरेको हुन्छ। व्यक्ति धन प्रति आकर्षित हुन्छ किनभने धन प्राप्त गर्दा उसले त्यसमा केही स्वाद प्राप्त गर्दछ।

**बब—** स्वादको अर्थ के हो ?

**श्रील प्रभुपाद—** (श्यामसुन्दरलाई) यिनीहरूले स्वादलाई कसरी परिभाषित गर्दछन् ?

**श्यामसुन्दर—** स्वाद वा आनन्द।

**बब—** ए !

**श्रील प्रभुपाद—** आनन्ददायक स्वाद। वेद भन्दछ- '**रसो वै सः**' स्वादको सही अर्थ रस हो। (श्यामसुन्दरकी पत्नी मालती प्रसाद लिएर प्रवेश गर्दछिन्) त्यो के हो ?

**मालती—** तारेको भन्टा, वैगुन हो।

**श्रील प्रभुपाद—** अहो ! सर्वआकर्षक ! सर्व आकर्षक ! (हाँस्नुहुन्छ)।

**बब—** वैज्ञानिक को हो ?

**श्रील प्रभुपाद—** वस्तु जस्तो छ, सोहीअनुसार जान्दछ त्यो नै वैज्ञानिक हो।

**बब—** वस्तु जस्तो छ, सोही अनुसार जान्दछु भन्ने सोच्दछु।

**श्रील प्रभुपाद—** के ?

**बब—** वस्तु जस्तो छ सोही अनुसार जान्दछु भन्ने आशा गर्दछु।

**श्रील प्रभुपाद—** होइन, उसले जान्दछु भन्ने ठान्दछ। वैज्ञानिकले ठीकसँग जान्दछ भनेर हामी उसकहाँ जान्छौं। वस्तु जस्तो छ, सोहीअनुसार जान्ने व्यक्तिलाई वैज्ञानिक भनिन्छ।

**श्यामसुन्दर—** महान् वैज्ञानिक भगवान् श्रीकृष्ण कस्ता हुनुहुन्छ ?

**श्रील प्रभुपाद—** उहाँ सबै कुरा जान्नुहुन्छ। विषयवस्तुका बारेमा विस्तृतरूपमा जान्ने व्यक्ति नै वैज्ञानिक हो। त्यसैले, उहाँ महान्वै ज्ञानिक हुनुहुन्छ।

**बब—** अहिले म विज्ञानको शिक्षक हुँ।

**श्रील प्रभुपाद—** ए ! अध्यापन गर्दछौं ? तर, जबसम्म तिमीसँग पूर्ण ज्ञान छैन, तिमीले कसरी अध्यापन गर्न सक्दछौं ? हाम्रो प्रश्न यो हो।

**बब—** पूर्ण ज्ञान नभए पनि हामीले अध्यापन गर्न सक्दछौं।

**श्रील प्रभुपाद—** त्यो त ठगी काम भयो, अध्यापन भएन। जसरी वैज्ञानिकहरू भन्दछन्— "एउटा ठुलो बाक्लो टुक्रा थियो त्यसबाट सृष्टि भयो।" हुन सक्दछ यो कस्तो भनाइ हो ? यो केवल ठगी हो। यो सिकाएको होइन, ठगेको हो।

**बब—** पूर्ण ज्ञान नभए पनि के मैले केही पाउन सक्दिन ? उदाहरणका लागि मैले ....

**श्रील प्रभुपाद—** तिमीले जहाँसम्म जानेका छौ, त्यहाँसम्म पढाउन सक्दछौं।

**बब—** हो, मैले आफूले जानेको भन्दा बढी पढाउँदछु भनेर दाबी गर्नुहुँदैन

**श्रील प्रभुपाद—** हो, त्यो ठगी हो।

**श्यामसुन्दर—** अर्को शब्दमा भन्दा अर्ध ज्ञानद्वारा सत्यता पढाउन हुँदैन।

**श्रील प्रभुपाद—** हो, कुनै पनि प्राणीलाई त्यसो गर्न सम्भव नै छैन। प्राणीसँग अपूर्ण इन्द्रियहरू छन्। त्यसैले, उसले कसरी पूर्ण ज्ञान पढाउन सक्दछ? उदाहरणका लागि तिमीले सूर्य एउटा गोलो थालजस्तो देख्छौं। तिमीसँग सूर्यसम्म पुग्ने कुनै साधन छैन। यदि तिमीले टेलिस्कोपबाट सूर्यलाई देख्न सक्दछौ र त्यो यस्तो र उस्तो छ भन्दछौ भने त्यो पनि तिमीले नै बनाएका हौ र तिमी अपूर्ण छौ। अनि तिम्रो औजार कसरी पूर्ण हुन सक्दछन्? त्यसैले, सूर्यसम्बन्धी तिम्रो ज्ञान अपूर्ण छ। जबसम्म सूर्यका बारेमा तिम्रो ज्ञान पूर्ण हुँदैन, तबसम्म सूर्यका बारेमा नपढाऊ, अन्यथा त्यो ठगी हुने छ।

**बब—** तर, सूर्य ९३,०००,००० माइल टाढा छ भन्ने अनुमान गरिएको छ भनेर पढाउन सकिन्छ?

**श्रील प्रभुपाद—** जब तिमीले अनुमान गरिएको छ भन्दछौ भने त्यो वैज्ञानिकता भएन।

**बब—** तर, करिब सबै वैज्ञानिक यस्तै छन् भन्ने म सोच्दछु। त्यसको अर्थ यो वैज्ञानिकता भएन?

**श्रील प्रभुपाद—** त्यो नै विषय वा बुँदा हो।

**बब—** सम्पूर्ण विज्ञान यो वा त्यो भनेर अनुमानमा नै आधारित छ, त्यो तपाईं पनि जान्नुहुन्छ।

**श्रील प्रभुपाद—** हो, तिनीहरूले अपूर्णताले युक्त भएर पढाइ रहेका छन्, जसरी चन्द्रमाका बारेमा प्रचार गरिरहेका छन्। के तिनीहरूको ज्ञान पूर्ण छ भन्ने सोच्दछौ?

**बब—** अहँ छैन।

**श्रील प्रभुपाद—** त्यसो हो भने?

**बब—** समाजमा शिक्षकको सही कर्तव्य के हो? एउटा विज्ञानको शिक्षक, उसले कक्षा कोठामा के गर्नुपर्दछ?

**श्रील प्रभुपाद—** कक्षा कोठामा? तिमीले केवल भगवान् श्रीकृष्णका बारेमा मात्र पढाऊ।

**बब—** उसले यस सम्बन्धमा पढाउन सक्दैन।

**श्रील प्रभुपाद—** होइन, यसमा सबै कुरा समाहित हुन्छ, तर उसको उद्देश्य भनेको भगवान् श्रीकृष्णलाई जान्ने हुनुपर्दछ।

**बब—** के विज्ञानको शिक्षकले अम्ल र क्षार मिश्रण बारेको विज्ञानलाई भगवान् श्रीकृष्णलाई केन्द्रित गरेर पढाउन सक्दछ?

**श्रील प्रभुपाद—** यो कसरी हुन सक्दछ?

**बब—** यदि विज्ञानको अध्ययन गर्‍यौं भने हामीले प्रकृतिको साधारण स्वभाव पाउँदछौं। यस्तो साधारण स्वभावले नियन्त्रक शक्तितर्फ सङ्केत गर्दछ।

**श्रील प्रभुपाद—** यस बारेमा कुनै दिन मैले पनि व्याख्या गरेको थिएँ। रासायनिक सूत्रअनुसार हाइड्रोजन र अक्सिजन मिसाए पानी बन्दछ, होइन? भनेर मैले रसायनविद्सँग सोधेको थिएँ। त्यसो होइन र?

**बब—** यो सत्य हो।

**श्रील प्रभुपाद—** अब, प्रशान्त महासागर र एटलान्टिक महासागरमा ठुलो परिमाणमा पानी छ। त्यसको लागि कत्रो परिमाणमा रसायन आवश्यक होला?

**बब—** यो सत्य हो।

**श्रील प्रभुपाद—** हो, कति टन आवश्यक होला?

**बब—** धेरै

**श्रील प्रभुपाद—** यो कसले आपूर्ति गर्‍यो होला?

**बब—** भगवान्ले आपूर्ति गर्नुभयो।

**श्रील प्रभुपाद—** कसैले आपूर्ति गर्नुपर्दछ।

**बब—** हो।

**श्रील प्रभुपाद—** यो नै विज्ञान हो। यसरी तिमीले पढाउन सक्दछौ।

**बब—** यदि अम्ल र क्षार मिसाएर तटस्थ अवस्था हुन्छ भनेर पढाउन झन्झट ठान्दछौ?

**श्रील प्रभुपाद—** यस्तै कुरा यहाँ ग्याँस निस्कँदा तरल पदार्थमा फिँज आउने वस्तु छन्। त्यो कसले गर्दछ? अम्ल र क्षार कसले आपूर्ति गर्दछ?

**बब—** ती सबै पानी जुन स्रोतबाट आउँदछ र त्यहीँबाट आउँदछन्।

**श्रील प्रभुपाद—** हो, जबसम्म तिमीसँग हाइड्रोजन र अक्सिजन हुँदैन, तिमीले पानी बनाउन सक्दैनौ। यस्ता विशाल महासागर छन्, केवल एट्लान्टिक र प्रशान्त महासागर मात्र होइन, यहाँ लाखौँ ग्रह छन् र यस्तै लाखौं एट्लान्टिक र प्रशान्त महासागर पनि छन् । कसले हाइड्रोजन र अक्सिजन मिसाएर पानीको सृष्टि गऱ्यो र त्यसको आपूर्ति कसले गऱ्यो ? यो नै हाम्रो प्रश्न हो। निश्चय नै कसैले आपूर्ति गऱ्यो होला। त्यसैले, यत्रो पानी अस्तित्त्वमा आयो होला ?

**बब—** हामीले हाइड्रोजन र अक्सिजनबाट पानी कसरी बनाउने हो त्यो पनि पढाउनुपर्दछ होला ? ती दुईलाई कुनै प्रक्रियाद्वारा जलाउने हो त्यो पनि पढाउनुपर्दछ होला ?

**श्रील प्रभुपाद—** त्यो गौण विषय हो। त्यो त्यति कठिन पनि छैन। जसरी मालतीले यो पुरी बनाइन। यहाँ आटा छ, घिउ छ अनि तिनले पुरी पकाइन। जब आटा र घिउ नै छैन भने पुरी पकाउने सम्भावना कसरी हुन सक्दछ ? भगवद्गीतामा भगवान् श्रीकृष्णले यस्तो भन्नुभएको छ— "पानी, पृथ्वी, हावा, आगो— यी मेरा शक्ति हुन्।" तिम्रो शरीर के हो ? तिम्रो बाहिरी शरीर तिम्रो शक्ति हो। के तिमीलाई थाहा छ ? तिम्रो शरीर शक्तिबाट निर्माण भएको छ। उदाहरणका लागि म खाइरहेको छु.....

**बब—** हो।

**श्रील प्रभुपाद—** यसरी, मैले केही शक्ति निर्माण गरिरहेको छु, त्यसकारण मेरो शरीर बाँचिरहेको छ।

**बब—** ए, त्यसो हो।

**श्रील प्रभुपाद—** त्यसकारण, तिम्रो शरीर तिम्रो शक्तिले निर्माण भएको हो।

**बब—** तर, जब तपाईंले भोजन गर्नुहुन्छ, त्यस भोजनमा सूर्यबाट शक्ति आएको हुन्छ।

**श्रील प्रभुपाद—** म उदाहरण दिन्छु। भोजनको पाचनक्रिया पश्चात् मैले शक्तिको निर्मण गर्दछु र त्यसले मेरो शरीरलाई व्यवस्थित गर्दछु। जब

तिम्रो शक्तिको आपूर्ति सही हुँदैन अनि तिम्रो शरीर कमजोर र अस्वस्थ हुन्छ। तिम्रो शरीर तिम्रो शक्तिद्वारा नै निर्माण भएको छ। त्यसरी नै, विशाल शरीररूपी ब्रह्माण्ड भगवान् श्रीकृष्णको शक्तिबाट निर्माण भएको हो। तिमीले यसलाई कसरी अस्वीकार गर्न सक्दछौं ? जसरी तिम्रो शरीर तिम्रो शक्तिबाट निर्माण भएको हो, त्यसरी नै यो ब्रह्माण्डरूपी शरीर पनि कसैको शक्तिबाट निर्माण भएको हुनुपर्दछ। उहाँ भगवान् श्रीकृष्ण हुनुहुन्छ।

**बब—** यसको समर्थन गर्न मैले सोच्नुपर्दछ।

**श्रील प्रभुपाद—** के को समर्थन ? यो तथ्य हो (हाँस्नुहुन्छ)। तिम्रो रौँ दिनहुँ बढ्दछ, किन ? किनभने तिमीमा केही शक्ति छ।

**बब—** त्यो शक्ति मैले भोजनबाट प्राप्त गर्दछु।

**श्रील प्रभुपाद—** जसरी भए पनि तिमीले शक्ति प्राप्त गर्दछौ र त्यही शक्तिबाट तिम्रा रौँ बढ्दछन्। यदि तिम्रो शक्तिबाट तिम्रो शरीरको निर्माण भएको हो भने त्यसरी नै यो विशाल ब्रह्माण्ड भगवान्को शक्तिबाट बनेको हो। यो तथ्य नै हो। यो तिम्रो शक्ति होइन

**बब—** हो, त्यो मैले बुझ्दछु।

**एउटा भक्त—** जसरी, यस ब्रह्माण्डका ग्रहहरू सूर्यका शक्ति हुन् र सूर्यको शक्तिबाट निर्माण भएका हुन्, त्यस्तै होइन ?

**श्रील प्रभुपाद—** हो, तर सूर्य कसले बनायो ? त्यो भगवान् श्रीकृष्णको शक्ति हो। किनभने त्यो ताप हो। भगवान् श्रीकृष्ण भन्नुहुन्छ— '**भूमिरापोऽनलो वायुः।**' "अनल अर्थात् ताप त्यो मेरो शक्ति हो।" सूर्य भगवान् श्रीकृष्णको तापशक्तिको प्रतिनिधि हो। त्यो तिम्रो शक्ति होइन। "सूर्य मैले बनाएको हो" तिमीले यस्तो भन्न सक्दैनौ। तर, त्यो कसैले बनाएको हो। भगवान् कृष्णले मैले बनाएको हुँ भन्नुभएको छ। हामी भगवान् श्रीकृष्णमा विश्वास गर्दछौँ। त्यसैले, हामी कृष्णमय भएका छौं।

**बब—** कृष्णमय !

**श्रील प्रभुपाद—** हो, त्यसैले हाम्रो ज्ञान पूर्ण छ। यदि मैले भगवान् श्रीकृष्णको शक्ति हो भने तिमीले अस्वीकार गर्न सक्दैनौ किनभने त्यो

तिम्रो शक्ति होइन। तिम्रो शरीरमा केही परिमाणमा ताप छ। त्यसरी नै, ताप कसैको शक्ति हो। त्यो व्यक्ति को हो? उहाँ भगवान् श्रीकृष्ण हुनुहुन्छ। भगवान् श्रीकृष्ण भन्नुहुन्छ "हो, त्यो मेरो शक्ति हो।" यसरी मेरो ज्ञान पूर्ण छ, किनभने मैले महान् वैज्ञानिकको भनाइलाई स्वीकार गरेको छु र म महान् वैज्ञानिक हुँ। व्यक्तिगतरूपले म मूर्ख हुन सक्दछु तर मैले महान् वैज्ञानिकबाट ज्ञान प्राप्त गरेको छु। त्यसैले म महान् वैज्ञानिक हुँ। यसरी, मलाई यसमा कुनै कठिनाइ छैन।

**बब—** माप गर्नुहोस्।

**श्रील प्रभुपाद—** मलाई महान् वैज्ञानिक हुन कुनै कठिनाइ छैन किनभने मैले महान् वैज्ञानिकबाट ज्ञान प्राप्त गरेको छु। भगवान् भन्नुहुन्छ, "यो पृथ्वी, पानी, आगो, हावा, आकाश, मन, शुद्धि र अहंकार यी भिन्दाभिन्दै आठ शक्ति मेरा हुन्।"

**बब—** भिन्दाभिन्दै शक्तिहरू?

**श्रील प्रभुपाद—** हो, यो दूधजस्तै। यो दूध के हो? गाईको भिन्न शक्ति। (श्यामसुन्दर र बब स्तब्ध भएर बुझेपछि हाँसे) होइन र? यो दूधको भिन्न शक्तिबाट प्रकट भएको हो।

**श्यामसुन्दर—** यो एउटा सह उत्पादन जस्तै हो, होइन र?

**श्रील प्रभुपाद—** हो।

**बब—** यसरी भगवान् श्रीकृष्णबाट यो शक्ति अलग गरेपछि यसको महत्त्व के हुन्छ?

**श्रील प्रभुपाद—** "अलग गरेको" अर्थ यो गाईको शरीरबाट बनेको हो, तर यो गाई होइन भन्ने हुन्छ। यसलाई नै "अलग गरेको" भनिन्छ।

**बब—** यो पृथ्वी र अन्य सबै भगवान् श्रीकृष्णबाट निर्माण भएको हो, तर यी सबै कृष्ण होइनन्?

**श्रील प्रभुपाद—** यी कृष्ण होइनन्। अथवा यी सँगसँगै कृष्ण पनि हुन्, कृष्ण पनि होइनन् भन्न सक्दछौं। "एक र भिन्न" यही नै हाम्रो दर्शन हो। यी सबै वस्तु भगवान् श्रीकृष्णबाट भिन्न छन् भन्न तिमी सक्दैनौं

किनभने भगवान् श्रीकृष्णविना यिनको अस्तित्व रहँदैन। तर, सँगसँगै "अब म पानीको पूजा गर्दछु, कृष्णको पूजा किन गर्ने ?" भन्न सक्दैनौं। परोपकारीहरू भन्दछन् सबै नै भगवान् हुनुहुन्छ। हामी जे सेवा गर्दछौं, त्यो भगवान्को पूजा हो। यो मायावादी दर्शन हो। सबै वस्तु भगवान्को शक्तिबाट निर्माण भएको हो। त्यसैले, सबै वस्तु नै भगवान् हुनुहुन्छ। तर, हाम्रो दर्शन भने सबै वस्तु भगवान् हुनुहुन्छ र हुनुहुन्न पनि।

**बब—** के यस पृथ्वीको कुनै वस्तु यस्तो छ, जो भगवान् हुनुहुन्छ ?

**श्रील प्रभुपाद—** छन्। एक प्रकारले यहाँका प्रत्येक वस्तु भगवान् हुन् किनभने प्रत्येक वस्तु भगवान्का शक्तिले बनेका हुन्। तर, त्यसको अर्थ कुनै पनि वस्तुको पूजा गर्दैमा भगवान्को पूजा हुँदैन।

**बब—** पृथ्वीमा भएको कुन वस्तु छ यस्तो जुन माया वा भ्रम होइन ?

**श्रील प्रभुपाद—** मायाको अर्थ शक्ति हो।

**बब—** अर्थात् शक्ति ?

**श्रील प्रभुपाद—** हो। मायाको अर्को अर्थ भ्रम हो। मूर्खहरू शक्तिलाई ऊर्जाशक्तिको रूपमा स्वीकार गर्दछन् त्यो नै माया हो। सूर्यको प्रकाश समान छ। सूर्यको प्रकाश तिम्रो कोठाभित्र छिर्दछ। सूर्य प्रकाश सूर्यको शक्ति हो। सूर्यप्रकाश तिम्रो कोठामा प्रवेश गरेकाले तिमीले सूर्य कोठा भित्र प्रवेश गर्‍यो भन्न सक्दैनौ। यदि सूर्य तिम्रो कोठामा प्रवेश गरे तिम्रो कोठा, तिमी र सबै वस्तु तुरुन्त नष्ट हुन्छन्। तिमीलाई सूर्य प्रवेश गरेको बुझ्ने समय पनि हुनेछैन। त्यस्तै होइन र ?

**बब—** त्यस्तै हो।

**श्रील प्रभुपाद—** तर, तिमीले सूर्य प्रकाशलाई सूर्य होइन भन्न सक्दैनौ। सूर्यबिना सूर्य प्रकाश कहाँ हुन्छ ? त्यसैले सूर्य प्रकाश सूर्य होइन भन्न सक्दैनौं। तर, सँगसँगै सूर्य प्रकाश सूर्य होइन। सूर्य पनि हो र सूर्य पनि होइन, यी दुवै हो। यो नै हाम्रो दर्शन हो। **अचिन्त्यभेदाभेद—** अचिन्त्य, भेद र अभेद। भौतिक दृष्टिमा तिमीले कुनै पनि वस्तुको राम्रो र नराम्रो पक्ष सँगसँगै अनुभूति गर्न सक्दैनौ। त्यो नै अचिन्त्य शक्ति हो। यसरी, सम्पूर्ण वस्तु

भगवान् श्रीकृष्णका शक्ति हुन्। त्यसैले कुनै पनि शक्तिबाट उहाँ प्रकट हुन सक्नुहुन्छ। त्यकारण, हामीले माटो वा अन्य कुनै पनि वस्तुबाट बनाइएको भगवान् श्रीकृणको स्वरूपको पूजा सेवा गर्दछौं भने त्यो रूप भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। तिमीले उहाँ भगवान् श्रीकृष्ण हुनुहुन्न भन्न सक्दैनौ। जब हामीले धातुले बनेको भगवान् श्रीकृष्णको विग्रहको पूजा गर्दछौं उहाँ भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। त्यो तथ्य नै हो किनभने धातु पनि भगवान् श्रीकृष्णको शक्ति हो। त्यसैले यो विग्रह भगवान् श्रीकृष्णभन्दा भिन्न छैन। भगवान् श्रीकृष्ण यति शक्तिशाली हुनुहुन्छ, उहाँ आफ्नो शक्तिमा पूर्णरूपले उपस्थिति हुन सक्नुहुन्छ। त्यसैले, यो विग्रहपूजा सेवा विधर्मीपन होइन। यदि तिमीले त्यो प्रक्रिया जान्यौ भने मात्र यो वास्तवमा भगवान्‌को पूजासेवा हो।

**बब—** यदि हामीले प्रक्रिया जान्यौं भने त्यो विग्रह भगवान् श्रीकृष्ण बन्दछ ?

**श्रील प्रभुपाद—** बन्ने होइन, भगवान् श्रीकृष्ण नै हुनुहुन्छ।

**बब—** विग्रह भगवान् श्रीकृष्ण हुनुहुन्छ यदि प्रक्रिया जानियो भने ?

**श्रील प्रभुपाद—** हो। जस्तैः यो विद्युत्तीय तार, यो विद्युत शक्ति हो। जसले यो जान्दछ, उसले यसबाट विद्युतीय शक्ति बाहिर निकाल्न सक्दछ।

**बब—** अन्यथा, यो एउटा तार मात्र हो।

**श्रील प्रभुपाद—** केवल तारमात्र।

**बब—** यदि मैले भगवान् श्रीकृष्णको मूर्ति निर्माण गरेँ भने त्यो मूर्ति तबसम्म कृष्ण ......

**श्रील प्रभुपाद—** त्यो भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। तर, तिमीले उहाँ कृष्ण हुनुहुन्छ भन्ने प्रक्रिया जान्नुपर्दछ अनि मात्र उहाँ कृष्ण हुनुहुन्छ।

**बब—** त्यो केवल माटो र हिलो मात्र होइन।

**श्रील प्रभुपाद—** निश्चय नै होइन। भगवान् श्रीकृष्णविना माटोको कुनै अस्तित्व हुँदैन। शक्तिमानबाट शक्ति अलग गर्न सकिंदैन। त्यो सम्भव नै हुँदैन। आगोबाट ताप अलग गर्न सकिंदैन। तैपनि आगो तापभन्दा अलग नै हुन्छ। साथै, ताप पनि आगोभन्दा अलग नै हुन्छ। तिमीले ताप लिएका छौ तर त्यसको अर्थ आगोको स्पर्श गरेका छौ भन्ने हुँदैन। आगोले ताप

उत्सर्जन गरे पनि आफ्नो पहिचान अलग नै राख्दछ।

त्यसरी नै यद्यपि भगवान् श्रीकृष्णले आफ्नो विभिन्न शक्तिले सबै वस्तु उत्पन्न गर्नुहुन्छ, तर उहाँ भगवान् श्रीकृष्ण भएर नै रहनुहुन्छ। मायावादीहरूले यदी सबै वस्तु कृष्ण भए कृष्णको अलग पहिचान नष्ट हुन्छ भन्ने सोच्दछन्। यो भौतिक सोचाइ हो। उदाहरणका लागि मैले बिस्तारै बिस्तारै दूध पिउँदा अन्त्यमा सबै दुध मेरो पेटभित्र जान्छ र अरू दुध बाँकी रहदैन। भगवान् श्रीकृष्ण त्यस्ता हुनुहन्न। उहाँ सर्वशक्तिमान् हुनुहुन्छ, हामीले उहाँका शक्तिहरूको उपयोग निरन्तर गरिरहेका छौं तैपनि उहाँ विद्यमान रहिरहनु हुन्छ।

एउटा कोरा उदाहरणः मानिसले अनगिन्ती सन्तान जन्माउँछ तैपनि, त्यो मानिस त्यही हुन्छ। यसको अर्थ उसले सयौं सन्तान जन्मायो, अब ऊ समाप्त भयो भन्ने हुँदैन। त्यसरी नै, भगवान् श्रीकृष्णका अनगिन्ती सन्तान भएपनि उहाँ रहिरहनुहुन्छ।

*पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते।*

"किनभने उहाँ परिपूर्णतम् हुनुहुन्छ यद्यपि उहाँबाट पूर्णताले युक्त वस्तु उत्पन्न हुन्छ, तैपनि उहाँ पूर्ण नै रहनुहुन्छ।"यो नै कृष्णचेतना हो। भगवान् श्रीकृष्ण कहिल्यै समाप्त हुनुहुन्न। भगवान् श्रीकृष्ण यति शक्तिशाली हुनुहुन्छ, त्यसैले उहाँ सर्वआकर्षक हुनुहुन्छ। यो भगवान् श्रीकृष्णको शक्तिको एकातर्फको प्रदर्शन हो। त्यसरी नै, उहाँमा असीमित शक्ति छन्। यो भगवान् श्रीकृष्णको शक्तिको एकतर्फको अध्ययन मात्र हो। यसरी भगवान् श्रीकृष्णका बारेमा अध्ययन गरियो भने त्यो नै कृष्णचेतना हो। यो अन्य हुन सक्दछ नहुन पनि सक्दछ भन्ने व्यर्थको कुरा होइन यो निश्चियपूर्वक ठीक हो।

**श्यामसुन्दर—** अध्ययन कार्य कहिल्यै समाप्त हुँदैन।

**श्रील प्रभुपाद—** हो, यो कसरी समाप्त हुन सक्दछ? भगवान् श्रीकृष्णसँग असीमित शक्तिहरू छन्।

२

# वैदिक संस्कृति

१९७२, फेब्रूवअरी २८

**बब—** मैले भक्तहरूसँग यौन सम्बन्धका बारेमा कस्तो अनुभव गर्दछौं भनेर प्रश्न गरेको थिएँ, उनीहरूको जस्तो अनुभव थियो, त्यसअनुसार मैले आफूले गर्न सक्ने ठानिन। यस गृष्म ऋतुको अन्त्यमा मेरो विवाह हुँदै छ।

**श्रील प्रभुपाद—** ए !

**बब—** जब म अमेरिका फर्कने छु गृष्मको अन्त्यमा सेप्टेम्बर वा अगस्टतिर मेरो विवाह हुने छ। भक्तहरू भन्दछन्— गृहस्थले केवल सन्तान जन्माउनका लागि मात्र सम्भोग गर्न सक्दछ। म त्यो अवस्थामा आफूलाई उभ्याउन सक्दिन। यस भौतिक संसारमा बसेर भक्त कुन प्रकारको यौनजीवनतर्फ उन्मुख हुने हो ?

**श्रील प्रभुपाद—** वैदिक सिद्धान्तअनुसार मानिस पूर्णतया यौनजीवनबाट मुक्त हुनुपर्दछ। सम्पूर्ण वैदिक सिद्धान्त नै भौतिक बन्धनबाट मुक्त हुनका लागि हुन्। भौतिक सुखका लागि विविध प्रकारका आसक्तिहरू छन्, तिमध्ये यौनजीवन सबैभन्दा माथि हुन्छ। भागवत्मा भनिएको छ, 'यो भौतिक जगत्मा **पुंसः स्त्रिया मिथुनी भावमेतम्।** "पुरुष महिला तर्फ आसक्त हुन्छ महिला पुरुष तर्फ आसक्त हुन्छिन्।" यो मानव समाजमा मात्र होइन, पशु समाजमा पनि हुन्छ। यस्तो आसक्ति भौतिक जीवनको आधार नै हो। एउटी महिला पुरुषको संगतका लागि तीब्र इच्छुक हुन्छिन्। सम्पूर्ण काल्पनिक उपन्यास, नाटक पिल्म र अन्य विज्ञापनहरूमा पनि महिला पुरुषबीचको आसक्तिका दृश्य देख्न सक्दछौं। त्यसकारण यस्तो आसक्ति पहिलादेखि नै यहाँ विद्यमान छ।

**बब—** महिला र पुरुषबीचको आसक्ति ?

**श्रील प्रभुपाद—** हो महिला र पुरुषबीच। यदि तिमी यस भौतिक संसारबाट मुक्त हुन चाहन्छौं भने त्यो आसक्तिलाई घटाएर शून्यमा ल्याउनुपर्दछ। अन्यथा, अर्को आसक्ति हुने छ र तिमीले अर्को जन्म लिनुपर्नेछ र त्यस जन्ममा तिमी मानव, देवता, पशु, सर्प, चरा वा जङ्गली जनावर, जे पनि हुन सक्दछौं। तिमीले अर्को जन्म लिनु नै पर्दछ।

त्यसैल, आसक्तिको वृद्धि हुने आधारभूत सिद्धान्त हाम्रो कार्य होइन तैपनि साधारण प्रवृत्ति त्यस्तै नै छ। **गृह क्षेत्र सूत** (घर, जमिन र पुत्र) तर यदि कसैले यो कम गरेर शून्य गर्न सके त्यो श्रेष्ठ हुन्छ। त्यसकारण हाम्रो वैदिक पद्धतिमा सर्वप्रथम युवकलाई ब्रह्मचारी अथवा यौनजीवन रहित रहने प्रशिक्षण दिइन्छ। वैदिक सिद्धान्त भनेको आसक्ति बढाउने होइन घटाउने हो। त्यसकारण, सम्पूर्ण पद्धतिलाई वर्णाश्रम धर्म भनिन्छ।

भारतीय पद्धतिलाई वर्ण र आश्रम भनिन्छः चार सामाजिक अवस्था र चार आध्यात्मिक अवस्था हुन्छन्। ब्रह्मचारी (ब्रह्मचर्य विद्यार्थी जीवन), गृहस्थ (विवाहित जीवन), वानप्रस्थ (अवकाशयुक्त जीवन) र संन्यास (निवृत्त जीवन) यी आध्यात्मिक अवस्था हुन्। सामाजिक अवस्थामा ब्राह्मण (विद्वान्), क्षत्रिय (प्रशासक), वैश्य (व्यापारी र कृषक) र शुद्र (साधारण श्रमिक) हुन्छन्। यस पद्धतिअनुसारका नियमित सिद्धान्त सही छन्। यदि कसैमा सोही अनुसार भौतिक जीवनको सुख प्राप्त गर्ने प्रवृत्ति भए पनि उसले त्यसलाई यसरी मोडेको हुन्छ अन्त्यमा उसले मुक्ति प्राप्त गरेर ऊ भगवद्धाम फर्कन्छ। यो नै सही प्रक्रिया हो। यसरी, यौन जीवनको आवश्यकता हुँदैन, तर हामी त्यस तर्फ आसक्त छौं। त्यसकारण केही विधिविधान छन्, जस अन्तर्गत रहेर यसलाई व्यवस्थित गर्न सकिन्छ। (पृष्ठभूमिमा अद्भूत मृदङ्गको,

ड्रमको आवाजसहित कीर्तन प्रारम्भ हुन्छ, साथै हाँसो र ठुलो स्वरमा हर्न बज्दछ )

**श्रील प्रभुपाद—** श्रीमद्भागवत (५.५.८) मा भनिएको छ

*पुंसः स्त्रिया मिथुनीभावमेतं तथोर्मिथा हृदयग्रन्थिमाहुः।*
*अतो गृहक्षेत्रसुताप्तवित्तैर्जनस्य मोहोऽयमहं ममेति।।*

महिला र पुरुषको आसक्ति सहितको यौन जीवन भौतिक जीवनको आधारभूत सिद्धान्त हो। जब उनीहरूको मिलन हुन्छ, उनीहरूप्रति आसक्ति बढ्दछ। त्यसरी बढेको आसक्तिले गृह (घर), क्षेत्र (जमिन), सूत (सन्तान), आप्त (मित्रता वा समाज) र वित्तरूपी परिणाम आउँदछ। वित्तको अर्थ धन हो। यस प्रकार— **गृह क्षेत्र सूताप्त वित्तै** मा ऊ फँस्दछ। **जनस्य मोहोऽयम्—** यो नै भ्रम हो। यस्तो भ्रमले गर्दा उसले सोच्दछ, **अहं मामेति—** "म यो शरीर हुँ र यो शरीरसँग सम्बन्धित सबै वस्तु मेरा हुन्।"

**बब—** त्यो फेरि के हो?

**श्रील प्रभुपाद—** यसरी आसक्ति बढ्दछ। भौतिक आसक्तिले गर्दा उसले सोच्दछ— "म यो शरीर हुँ।" त्यसपछि अझ अघि— "म अमेरिकी, म भारतीय, म जर्मन, म यो, म त्यो र म मेरो शरीर। यो मेरो देश हो। मैले मेरो देश र समाजका लागि योगदान दिनुपर्दछ।" यसप्रकार, भ्रम बढ्दै जान्छ। यसरी, भ्रममा रहँदा जब उसको मृत्यु हुन्छ अनि उसले अर्को शरीर प्राप्त गर्दछ। त्यो शरीर उसको कर्म अनुसार उच्चस्तर वा निम्नस्तर जुन पनि हुन सक्दछ। यदि उसले स्वर्गका उच्चस्तरको शरीर प्राप्त गरे पनि ऊ फसेको नै हुन्छ। यदि उसले बिरालो, कुकुरको शरीर प्राप्त गरे उसले आफ्नो जीवन नै नष्ट गरेको हुन्छ। वा रूख हुने पनि बढी सम्भावना हुन्छ। कसरी आत्मा एक शरीरबाट अर्को शरीरमा स्थान्तरण हुन्छ र ऊ कसरी विभिन्न प्रकारका शरीरमा बाँधिन्छ भन्ने विज्ञानका बारेमा यस संसारमा कसैलाई जानकारी नै छैन। यो विज्ञान अज्ञात नै छ।

जब अर्जुनले सोधे, "यदि मैले मेरो भाईको हत्या गरेँ, यदि विरोधी पक्षमा रहेका हजुरबुवाको हत्या गरेँ भने?" यसरी, उनले जीवनको शरीरिक अवधारणाले सोचेका थिए।

जब उनको समस्याको समाधान भएन उनी भगवान् श्रीकृष्णको शरणमा परे र उहाँलाई आफ्ना आध्यात्मिक गुरु स्वीकार गरे। जब भगवान् श्रीकृष्ण उनको आध्यात्मिक गुरु बन्नुभयो, प्रारम्भमा अर्जुनलाई दण्ड दिदैं भन्नुभयो:

*अशोच्यानन्वंशोचस्त्वं प्रज्ञावादाँश्च भाषसे।*
*गतासूनगतासूँश्च नानुशोचस्ति पण्डितः।।*

"तिमी विद्धानका जस्ता कुरा गर्दछौ तर मूर्खजस्ता भएर शारीरिक अवधारणाको जीवनका बारेमा पनि कुरा गर्दै छौं।" यसरी यौनजीवनले शारीरिक जीवनको अवधारणातर्फ वृद्धि गर्दछ। त्यसकारण, सम्पूर्ण प्रक्रिया यसलाई घटाएर शुन्यमा लैजानु नै हो।

**बब—** आफ्नो जीवनमा नै घटाउने हो?

**श्रील प्रभुपाद—** हो, घटाउने नै हो। एउटा युवकलाई विद्यार्थीको अवस्थामा पच्चीस वर्षसम्म यौनजीवनका लागि निषेध गरिन्छ। केही ब्रह्मचारी युवक (नैष्ठिक ब्रह्मचारी) जीवन भरी ब्रह्मचारी बस्दछन्। किनभने, तिनीहरूलाई शिक्षा दिइएको छ र तत्पश्चात् उनीहरू पूर्णतया आध्यात्मिक ज्ञानले विज्ञ भएका छन्। त्यसैले उनीहरू विवाह गर्न चाहँदैनन्। विनाविवाह यौन जीवनमा जान सकिँदैन त्यो निषेध गरिएको छ। त्यसकारण मानव समाजमा विवाह गरिन्छ, पशुसमाजमा त्यस्तो छैन।

तर, मानिसहरू विस्तारै मानव समाजबाट पशुसमाजतर्फ झर्दै छन्। तिनीहरूले विवाह पद्धतिलाई बिर्सदै छन्। यसबारे शास्त्रले भविष्य वाणी गरेको छ। **दाम्पत्येऽभिरुचिहेतु-** यो कलियुग (झगडाले युक्त युग) मा विवाह हुने छैन। युवा युवती सँगै बस्न सम्झौता गर्दछन्

र उनीहरूको सम्बन्ध यौन शक्ति रहँदासम्म रहने छ। यदि महिला वा पुरुष यौनजीवनमा कमजोर भएमा पारपाचुके हुनेछ। यो दर्शनका बारेमा पश्चिमी दर्शनशास्त्री फ्रेयड र अन्यले धेरै पुस्तक लेखेका छन्। तर, वैदिक संस्कृति अनुसार हामी सन्तान उत्पादनका लागि मात्र यौन सम्भोग गर्दछौं अन्यथा गर्दैनौं। यौनजीवन मनोभावनाको अध्ययनको लागि गर्दैनौं। त्यसका लागि प्राकृतिक मनोविज्ञान पहिला देखि नै छ। यदि कसैले कुनै दर्शन पढेको छैन भने पनि ऊ यौन सम्भोगतर्फ आकर्षित हुन्छ। यस बारेमा कसैलाई पनि विद्यालय वा महाविद्यालयमा पढाइँदैन। तर, यो कसरी गर्ने हो भनेर सबैले जान्दछन् (उनीहरू हाँस्दछन्)। साधारण प्रवृत्ति यस्तै नै छ। तर, यो रोक्नका लागि शिक्षा दिन पर्दछ, र त्यो नै सही शिक्षा हो।

**बब**— वर्तमान अमेरिकामा यो नै भौतिक अवधारणा छ।

**श्रील प्रभुपाद**— अमेरिकामा अहिले धेरै सुधारको आवश्यकता छ र कृष्णभावनामृत आन्दोलनले त्यो सबै गर्ने छ। म तिम्रो देशमा गए युवायुवती मित्रसमान भएर बसेको देखेँ। त्यसैले, मैले मेरा विद्यार्थीलाई यसरी मित्र भएर बस्न पाउँदैनौ तिमीहरूले विवाह गर्नुपर्दछ भनेँ।

**बब**— धेरैले विवाह पनि पवित्र छैन भनेर देखे। त्यसैले, विवाह गर्ने इच्छा नै गर्दैनन्। किनभने, विवाह गर्दछन् जब अवस्था सही हुँदैन उनीहरूले सजिलै पारपाचुके गर्दछन्।

**श्रील प्रभुपाद**— हो।

**बब**— केही व्यक्तिहरूले विवाह गर्नु कुनै अर्थ छैन भन्ने महसुस गर्दछन्।

**श्रील प्रभुपाद**— होइन, तिनीहरूको विचारमा विवाह एउटा आधिकारिक वा न्यायपूर्ण वेश्यावृत्ति हो। तिनीहरू त्यसरी सोच्दछन्, तर विवाह त्यस्तो होइन। क्रिस्चियन पत्र, त्यसलाई के भनिन्छ?

**श्यामसुन्दर**— वाचटावर?

**श्रील प्रभुपाद**— वाचटावर, एउटा पादरीले समलिङ्गी दुई पुरुषबीच विवाह गर्न अनुमति दिएकोमा त्यस पत्रिकाले आलोचना गरेको छ। यस्ता कार्य भइरहेका छन्। उनीहरूले यसलाई शुद्ध वेश्यावृत्तिका रूपमा लिएका छन्। यति नै हो। त्यसैले, मानिसले सोच्दछन्— "यति धेरै खर्च गरेर नियमित वेश्यावृत्ति राख्न के औचित्य छ? यो नगर्नु नै राम्रो हुन्छ।"

**श्यामसुन्दर**— तपाईं गाई र बजारको उदाहरण दिनुहुन्छ।

**श्रील प्रभुपाद**— हो। यदि बजारमा दूध उपलब्ध छ भने गाई किन पाल्ने? (सबै हाँस्दछन्) पश्चिमी देशको दयनीय अवस्था छ, जुन मैले देखेको छु। भारतमा पनि विस्तारै त्यही आउँदैछ। त्यसकारण, हामीले मानिसहरूलाई आवश्यक आध्यात्मिक जीवनको सिद्धान्तको शिक्षा दिन कृष्णभावनामृत आन्दोलन प्रारम्भ गरेका छौं। यो साम्प्रदायिक धार्मिक आन्दोलन होइन। यो सबैका लागि हुने सांस्कृतिक आन्दोलन हो।

३

# जीवनको सही लक्ष्य

१९७२, फेब्रूवअरी २८ (क्रमशः)

**श्रील प्रभुपाद—** यो आन्दोलन विशेष गरेर मानिसलाई उसको जीवनको सही लक्ष्यमा पुऱ्याउनुका लागि हो।

**बब—** के जीवनको सही लक्ष्य भनेको भगवान्लाई जान्नु हो?

**श्रील प्रभुपाद—** हो। परमधाम फर्कनु हो। पानी समुद्रबाट बादलका रूपमा आउँदछ, बादल वर्षाको पानीको रूपमा तल झर्दछ र त्यसको सही लक्ष्य भनेको नदीमा बगेर पुनः समुद्रमा प्रवेश गर्ने नै हो। हामी भगवान्कहाँबाट आएका हौं। अहिले हामी भौतिक जीवनले व्यग्र पारिएका छौं। त्यसकारण हाम्रो लक्ष्य भनेको यस व्यग्र अवस्थाबाट मुक्त भएर भगवद्धाम फर्कने हुनुपर्दछ। यो नै जीवनको सही लक्ष्य हो।

*मामुपेत्य पुनर्जन्म दुःखालयमशाश्वतम्।*
*नाप्नुवन्ति महात्मनः संसिद्धि परमां गतः।।*

यो भनाइ भगवद्गीताको हो। भगवान् श्रीकृष्ण भन्नुहुन्छ, "यदि कोही मकहाँ आइपुग्दछ भने ऊ यहाँ पुनः फर्केर आउनुपर्दैन।" कहाँ? यो स्थानमा **दुःखालयमशाश्वतम्** "यो स्थान दुःखको घर हो।" यो कुरा सबैले जान्दछन्, तर तथाकथित नेताहरूले मूर्ख बनाइरहेका छन्। भौतिक जीवन दुःखदायी जीवन हो। भगवान् श्रीकृष्ण भन्नुहुन्छ यो स्थान **दुःखालयम्**- दुःखको घर हो। साथै यो **अशाश्वतम्** क्षणिक वा अस्थायी पनि हो। तिमीले सामञ्जस्य कायम गर्न सक्दैनौं- "दुःख छ ठिकै छ म यसरी नै अमेरिकी वा भारतीय भएर बस्दछु" यसो गर्न सक्दैनौं। तिमी अमेरिकी वा भारतीय भएर बस्न सक्दैनौं। तिमीले म अमेरिकामा जन्मे म सुखी छु भन्ने सोच्दछौ। तर, तिमी अमेरिकी भएर

लामो समय रहन सक्दैनौ। तिमी त्यस ठाउँमा हटाइने छौ। तिमीलाई तिम्रो अर्को जीवन के हुन्छ थाहा छैन। त्यसकारण, यो संसार **दुःखालयम् अशाश्वतम्** अर्थात् दुःखदायी र अस्थायी छ। यो नै हाम्रो दर्शन हो।

**बब—** तर, यदि भगवान्सम्बन्धी केही ज्ञान भयो भने जीवन दुःखदायी हुँदैन ?

**श्रील प्रभुपाद—** होइन, केही ज्ञानले काम गर्दैन। तिमीले पूर्ण ज्ञान प्राप्त गर्नुपर्दछ। **जन्म कर्म च मे दिव्यमेवं यो वेत्ति तत्त्वतः** अर्थात् "पूर्णरूपले"। भगवद्गीतामा पूर्ण ज्ञानको शिक्षा दिइएको छ। त्यसैले, हामीले मानवसमाजका प्रत्येक व्यक्तिलाई भगवद्गीता यथारूप अध्ययन गर्ने अवसर प्रदान गरेका छौं, जसले गर्दा तिनीहरू आफ्नो जीवन पूर्ण गर्न सकून्। यो नै कृष्णभावनामृत आन्दोलन हो। आत्माको देहान्तरका बारेमा तिम्रो विज्ञानले के भन्दछ ?

**बब—** मेरो विचारमा विज्ञानले यसलाई अस्वीकार पनि गर्दैन र स्वीकार पनि गर्दैन। विज्ञानले यसबारे केही जान्दैन।

**श्रील प्रभुपाद—** त्यसकारण, म भन्दछु तिम्रो विज्ञान अपूर्ण छ।

**बब—** विज्ञानले केही भन्दछ। विज्ञानमा भनिएको छ, शक्ति कहिल्यै नष्ट हुँदैन, त्यो परिवर्तन हुन्छ।

**श्रील प्रभुपाद—** त्यो ठिकै छ। तर, शक्तिले भविष्यमा कसरी कार्य गर्दछ विज्ञानलाई त्यो जानकारी छैन। शक्तिमा कसरी दिशा परिवर्तन हुन्छ? कसरी विभिन्न कौशलतापूर्वक शक्तिले विविधतापूर्वक कार्य गर्दछ? उदाहरणका लागि विद्युतीय शक्ति विभिन्न प्रयोगद्वारा यसले हिटर र फ्रिज सञ्चालन गर्दछ। विद्युतीय शक्ति एउटा भए पनि यी कार्य परस्पर विरुद्ध छन्। त्यसरी नै यो जीवनशक्ति कसरी निर्देशित छ? यो कुन मार्गतर्फ गइरहेको छ? यसले अर्को जन्ममा कस्तो प्रतिफल दिन्छ? यो कुरा तिनीहरू जान्दैनन्। तर, भगवद्गीतामा **यथा विहाय-** तिमी एउटा वस्त्र कमेजद्वारा ढाकिएका छौं। जब यो कमेज प्रयोग गर्न अयोग्य हुन्छ, तिमीले त्यो परिवर्तन गर्दछौं। त्यसरी नै यो शरीर एउटा

कमेज वा कोट समान हो। जब यो प्रयोगका लागि अयोग्य हुन्छ हामीले यसलाई परिवर्तन गर्दछौं।

**बब—** "हामी" भन्ने के हो, जुन परिवर्तन गर्नुपर्दछ? के त्यो स्थिर हुन्छ?

**श्रील प्रभुपाद—** त्यो आत्मा हो।

**बब—** एक जीवनबाट अर्को जीवनसम्म?

**श्रील प्रभुपाद—** त्यो आत्मा हो र त्यो नै म हुँ। "तिमी" भनेर के बोल्दै छौ? त्यो "तिमी" हौ। "म" भनेर जे भन्दछु त्यो नै आत्मा हो।

**बब—** मेरो आत्मा तपाईंको आत्माभन्दा भिन्न छ?

**श्रील प्रभुपाद—** हो, तिमी वैयक्तिक आत्मा हौ र म पनि व्यैयक्तिक आत्मा हुँ।

**बब—** तपाईंले आफूलाई कर्मिक प्रभावबाट मुक्त गर्नुभएको छ। यदि मैले आफूलाई कर्मिक प्रभावबाट मुक्त गर्न सके भने के हाम्रो आत्मा समान हुन्छन् वा भिन्न हुन्छन्?

**श्रील प्रभुपाद—** सबैमा समान गुण भएको आत्मा हुन्छ। वर्तमानमा तिमी जीवनको एउटा विशेष अवधारणामा छौ। यी तिम्रा गाउँलेले (उपस्थित भक्ततर्फ इसारा गर्दै) अर्को विशेष अवधारणा अपनाएका छन्। तर, चरम प्रशिक्षण भनेको कसरी कृष्णचेतनाले युक्त हुनु नै हो र त्यो नै पूर्णता हो।

**बब—** यदि दुई व्यक्ति कृष्णचेतनाले युक्त छन् भने के तिनीहरूको आत्मा समान हुन्छ?

**श्रील प्रभुपाद—** आत्मा सदैव समान हुन्छ।

**बब—** के प्रत्येक व्यक्तिमा? के प्रत्येक व्यक्तिमा समान हुन्छ?

**श्रील प्रभुपाद—** हो, हुन्छ।

**बब—** (दुई भक्ततर्फ इसारा गर्दै) यदि यी दुई कृष्णचेतनाले युक्त छन् भने के तिनीहरूको आत्मा समान छ?

**श्रील प्रभुपाद—** आत्मा समान हुन्छ, तर कृष्णचेतनाले युक्त भए पनि



कृष्णकृपामूर्ति
श्री श्रीमद् अभयचरणारविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद
संस्थापक आचार्य—अन्तर्राष्ट्रिय कृष्णभावनामृत सङ्घ






इस्कोन मायापुर स्थित श्रीश्रीराधामाधवको अर्चाविग्रह (माथि)
भगवान् चैतन्यको जन्मभूमि मायापुर स्थित इस्कोन मन्दिर (तल)





मायापुर स्थित श्रील प्रभुपादको समाधी (माथि)
मायापुर स्थित श्रील प्रभुपादको कुटी (तल)



भगवान् श्रीकृष्णका भक्तहरुले भक्तिमय क्रियाकलापद्धारा सही सुखको अनुभव गर्दछन् भने आधुनिक सभ्यताका भौतिकवादी व्यक्तिहरु नसापान गरेर कृत्रिम सुखी हुने प्रयास गर्दछन्

आत्मा सदैव वैयक्तिक हुन्छ। उदाहरणका लागि तिमी मानिस हौ र म पनि मानिस हुँ। यदि म क्रिस्चियन नभए पनि र तिमी हिन्दु नभए पनि हामी दुवै मानिस हौं। त्यसरी नै आत्मा कृष्णचेतनाले युक्त वा विमुख जे भए पनि केही फरक पर्दैन। तर, आत्मा आत्मा नै हुन्छ।

**बब—** के यसबारेमा मलाई अरू बढी भन्नुहुन्छ?

**श्रील प्रभुपाद—** शुद्ध आत्माको रूपमा सबै आत्मा समान हुन्छ, त्यो पशु भए पनि। त्यसकारण, भनिएको छ '**पण्डितः समदर्शिनः।**' जुन व्यक्ति वास्तवमा विद्वान् छ, उसले बाहिरी आवरण हेर्दैन, त्यो मानिसमा होस वा पशुमा होस्।

**बब—** यस सन्दर्भमा के म अर्को प्रश्न सोध्न सक्दछु?

**श्रील प्रभुपाद—** सक्दछौं।

**बब—** आत्मा भगवान्को अंश हो भनेर म स्वीकार गर्दछु। त्यससमय मैले भगवान्को अनुभव गरेको सोच्दछु। म यहाँ छु र तपाईंले भगवान् यहाँ हुनुहुन्छ भन्न सक्नुहुन्छ। त्यसैले यदि आत्मा म भित्र छ भने के मैले भगवान्लाई म भित्र अनुभव गर्न सक्दछु? सम्पूर्ण भगवान् होइन, मेरो अर्थ .......

**श्रील प्रभुपाद—** भगवान्को केही भाग।

**बब—** तर, मैले म भित्र भगवान् भएको महसुस गर्दिनँ। भगवान् यहाँ हुन सक्नुहुन्छ, तर म भन्दा भिन्न हुनुहुन्छ होला। तर, के मैले मभित्र भगवान् भएको महसुस गर्न सक्दछु, किनभने म भगवान्को अंश हुँ?

**श्रील प्रभुपाद—** सक्दछौं। भगवान्, भित्र पनि हुनुहुन्छ। भगवान् सर्वत्र हुनुहुन्छ। भगवान् भित्र बाहिर हुनुहुन्छ। यो नै जान्न आवश्यक छ।

**बब—** भगवान् भित्र हुनुहुन्छ भनेर कसरी महसुस गर्ने हो?

**श्रील प्रभुपाद—** सुरुमा त्यो हुन सक्दैन। तिमीले वैदिक जानकारी भएका शास्त्रबाट त्यो जान्नु पर्दछ। उदाहरणका लागि भगवद्गीता यथारूपमा भनिएको छ— '**ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति।**' भगवान् प्रत्येकका हृदयमा हुनुहुन्छ। **परमाणु-चयान्तचरस्थम्-** भगवान्

प्रत्येक परमाणुमा पनि हुनुहुन्छ। यो नै प्रथम जानकारी हो। त्यसपछि क्रमशः योगको प्रक्रियाद्वारा अनुभूति गर्नुपर्दछ।

**बब—** योगको प्रक्रिया ?

**श्रील प्रभुपाद—** हो।

**बब—** के 'हरे कृष्ण' कीर्तन गर्नु नै योगको प्रक्रिया हो ?

**श्रील प्रभुपाद—** हो, यो पनि योगको प्रक्रिया नै हो।

**बब—** मैले यो अनुभूति गर्न कुन योगको प्रक्रिया अपनाउनुपर्दछ, जसले गर्दा आफूभित्र आत्माको अनुभूति गर्न सकूँ ?

**श्रील प्रभुपाद—** हो, यस्ता धेरै योगका प्रक्रिया छन्, तर यस युगका लागि धेरै राम्रो प्रक्रिया छ।

**बब—** कीर्तन

**श्रील प्रभुपाद—** हो।

**बब—** यो प्रक्रियाद्वारा के मैले आफैंभित्र मात्र होइन, बाहिर पनि भगवान्‌को अनुभूति गर्न सक्दछु ?

**श्रील प्रभुपाद—** त्यसपछि तिमीले भगवान्‌का बारेमा सबै बुझ्ने छौ। जस्तै भगवान् भित्र कस्ता हुनुहुन्छ, बाहिर कस्ता हुनुहुन्छ र भगवान्‌ले कार्य कसरी गर्नुहुन्छ, सबै कुरा प्रकट हुन्छ। यसप्रकारको सेवा भावना भएपछि भगवान्‌ले आफूलाई प्रकट गर्नुहुन्छ। तिमीले आफ्ना कर्मद्वारा भगवान्‌लाई बुझ्न सक्दैनौं। केवल उहाँले आफूलाई प्रकट गर्नु भयो भने मात्र बुझ्न सकिन्छ। उदाहरणका लागि जब सूर्य रात्रीमा तिम्रो दृष्टिबाट ओझेल भएपछि तिमीले टर्चलाइट वा अन्य प्रकाशबाट देख्न सक्दैनौ। तर, विहान तिमीले सूर्य बिना टर्च स्वतः देख्न सक्छौ। त्यसरी नै, तिमीले यस्तो परिस्थितिको निर्माण गर्नुपर्दछ र आफूलाई त्यस्तो परिस्थितिमा राख्नुपर्दछ जहाँ भगवान् स्वतः प्रकट हुनुहुन्छ। यस्तो कुनै पद्धतिबाट तिमीले "भगवान् अघि आउनुहोस्, म दर्शन गर्छु" भनेर आदेश दिन सक्दैनौ। भगवान् तिम्रो आदेश पालना गर्ने हुनुहुन्न।

**बब—** हामीले भगवान्लाई प्रकट हुनका लागि प्रसन्न गराउनुपर्दछ, त्यो नै सही हो, होइन ?

**श्रील प्रभुपाद—** हो।

**श्यामसुन्दर—** हामीले भगवान्लाई प्रसन्न बनायौं भनेर कसरी थाहा पाउन सकिन्छ ?

**श्रील प्रभुपाद—** जब हामीले उहाँको दर्शन गर्दछौं अनि जसरी भोजन गरेपछि भोकबाट सन्तुष्ट हुन्छौं र शक्ति प्राप्त गर्दछौं र त्यसबारेमा कसैलाई सोध्न आवश्यक हुँदैन, त्यसरी उहाँका बारेमा बुझ्न जान्न सकिन्छ। यदि तिमीले केही खान्छौ, त्यसबाट शक्ति प्राप्त गरेको अनुभव गर्दछौ। त्यसका लागि अन्य कसैसँग सोध्न पर्दैन। त्यसरी नै यदि तिमीले वास्तवमा भगवान्को सेवा गर्‍यौ भने "भगवान्ले मलाई आदेश दिइरहनुभएको छ, भगवान् यहाँ हुनुहुन्छ। मैले भगवान्को दर्शन गरे" भन्ने कुरा जान्न सक्दछौ

**श्यामसुन्दर—** वा भगवान्का प्रतिनिधि पनि

**श्रील प्रभुपाद—** हो, त्यो पनि।

**श्याम सुन्दर—** यो सजिलो लाग्दछ।

**श्रील प्रभुपाद—** तिमी भगवान्का प्रतिनिधि मार्फत जानुपर्दछ **यस्य प्रसादात् भगवत्प्रसादः।** यदि तिमीले भगवान्का प्रतिनिधिलाई प्रसन्न तुल्यायौ भने भगवान् स्वतः प्रसन्न हुनुहुन्छ, अनि तिमीले सोझै दर्शन गर्न सक्दछौ।

**बब—** हामीले भगवान्का प्रतिनिधिलाई कसरी प्रसन्न गर्न सक्दछौं ?

**श्रील प्रभुपाद—** तिमीले उनको आदेशको पालना गर्नुपर्दछ त्यति नै हो। गुरु भगवान्का प्रतिनिधि हुनुहुन्छ। उहाँले तिमी यो गर त्यो गर भन्नुहुन्छ। यदि तिमीले ती कार्य गर्‍यौ भने त्यो नै प्रशन्नता गरिएको हुन्छ। **यस्याप्रसादान् न गतिः कुतोऽपि।** यदि तिमीले आध्यात्मिक गुरुलाई अप्रसन्न गर्‍यौ भने तिम्रो अस्तित्व कहीँ पनि हुँदैन। त्यसैले हामीले गुरुको पूजा गर्दछौं। **साक्षाद्धरित्वेन समस्त शास्त्रैक्तस्तथा भाव्यत**

**एवं सद्भिः।** "गुरुलाई भगवान् सरह स्वीकार गर्नुपर्दछ। शास्त्रको आदेश त्यही नै छ।"

**बब—** गुरुलाई भगवान्‌को प्रतिनिधि सरह स्वीकार गर्नुपर्दछ?

**श्रील प्रभुपाद—** हो, गुरु भगवान्‌का प्रतिनिधि हुनुहुन्छ। गुरु भगवान् श्रीकृष्णको वहिरङ्गा अभिव्यक्ति हुनुहुन्छ।

**बब—** तर भगवान् श्रीकृष्णको अवतार भन्दा भिन्न होइन?

**श्रील प्रभुपाद—** हो।

**बब—** भगवान् श्रीकृष्ण र चैतन्य महाप्रभु पृथ्वीमा आउँदाको बहिरङ्गा अभिव्यक्तिभन्दा गुरु रूपी बहिरङ्गा अभिव्यक्ति कति कारणले भिन्न छ?

**श्रील प्रभुपाद—** गुरु भगवान् श्रीकृष्णका प्रतिनिधि हुनुहुन्छ। गुरु कस्तो हुनुपर्दछ भनेर केही लक्षण हुन्छन्। वेदमा त्यस्ता सामान्य लक्षणको व्याख्या गरिएको छः

*तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।*

गुरु, गुरुशिष्य परम्परामा रहेको हुनुपर्दछ र आफ्ना गुरुबाट वेदका बारेमा विस्तृत वर्णन श्रवण गरेको हुन पर्दछ। साधारणतया गुरुको लक्षण भनेको ऊ पूर्ण र शुद्ध भक्त हुन पर्दछ त्यति नै हो। उहाँले भगवान् श्रीकृष्णका सन्देशको प्रचार गर्दै उहाँको सेवा गर्नुपर्दछ।

**बब—** भगवान् चैतन्य तपाईंभन्दा भिन्दै प्रकारका गुरु हुनुहुन्थ्यो?

**श्रील प्रभुपाद—** होइन, होइन। गुरु विभिन्न प्रकारका हुँदैनन्। सबै गुरु एकै प्रकारका हुन्छन्।

**बब—** तर उहाँ, के उहाँ त्यससमयमा सँगसँगै अवतार पनि हुनुहुन्थ्यो?

**श्रील प्रभुपाद—** हो उहाँ भगवान् श्रीकृष्ण स्वयम् हुनुहुन्थ्यो र साथसाथै गुरुको प्रतिनिधित्व पनि गरिरहनुभएको थियो।

**बब—** ए त्यसो हो?

**श्रील प्रभुपाद—** हो।

**बब—** त्यसपछि?

**श्रील प्रभुपाद—** भगवान् श्रीकृष्ण भगवान् हुनुहुन्छ। त्यसैले, उहाँ चाहनुहुन्छ **सर्वधर्मान् परित्यज्य मामेकं शरणं व्रजः।** "सबै धर्मको त्याग गरेर केवल मेरो शरणमा आऊ"। तर मानिसले उहाँलाई गलत तरिकाले बुझे। त्यसैले, भगवान् श्रीकृष्ण पुनः आउनुभयो र मानिसलाई भगवान् श्रीकृष्णको शरणमा कसरी पर्ने हो त्यो सिकाउनुभयो।

**श्याम सुन्दर—** भगवान् श्रीकृष्णले भगवद्गीतामा "म आध्यात्मिक गुरु हुँ" भनेर भन्नुभएको छैन र?

**श्रील प्रभुपाद—** भन्नुभएको छ। उहाँ मूल आध्यात्मिक गुरु हुनुहुन्छ, किनभने अर्जुनले उहाँलाई आध्यात्मिक गुरु हुनुहुन्छ भनेर स्वीकार गरेका छन्। त्यसो गर्न के नै कठिनाई हुन्छ? **शिष्यस्तेहं शाधि मां त्वां प्रपन्नम्।** अर्जुनले भगवान्सँग भने— "म हजुरको शिष्य हुँ र मेरो आत्मा हजुरमा समर्पण गरेको छु। कृपया, निर्देशन गर्नुहोस्।" भगवान् श्रीकृष्ण आध्यात्मिक गुरु नभए अर्जुन कसरी उहाँका शिष्य बन्न सक्दछन्? त्यसैले, भगवान् श्रीकृष्ण मूल गुरु हुनुहुन्छ। **तेने ब्रह्म हृदा य आदिकवये:** "सृष्टिको पहिलो व्यक्ति ब्रह्माजीको हृदयमा सर्वप्रथम वैदिक ज्ञान प्रदान गर्ने उहाँ नै हुनुहुन्छ।" त्यसकारण उहाँ नै मूल गुरु हुनुहुन्छ।

**बब—** भगवान् श्रीकृष्ण?

**श्रील प्रभुपाद—** हो, उहाँ नै मूल गुरु हुनुहुन्छ। त्यसपछि उहाँका शिष्य ब्रह्माजी गुरु हुनुभयो। त्यसपछि उहाँका शिष्य नारद गुरु हुनुभयो त्यसपछि उहाँका शिष्य व्यास गुरु हुनुभयो। यसरी गुरु परम्परा प्रारम्भ भयो। **एवं परम्परा प्राप्तम्।** दिव्य ज्ञान यसरी नै गुरुशिष्य परम्पराअनुसार प्राप्त हुन्छ।

**बब—** गुरुले ज्ञान यहि गुरु परम्परा अनुसार प्राप्त गर्दछन् भगवान् श्रीकृष्णबाट सोझै प्राप्त गर्दैनन्? के तपाईंले कुनै ज्ञान भगवान् श्रीकृष्णबाट सोझै प्राप्त गर्नुभयो?

**श्रील प्रभुपाद—** हो, प्राप्त गरेको छु। भगवान् श्रीकृष्णको सोझो निर्देशन भनेको नै भगवद्गीता हो।

**बब—** ए, तर ........

**श्रील प्रभुपाद—** तर, तिमीले गुरुपरम्पराबाट अध्ययन गर्नुपर्दछ, अन्यथा तिमीले गलत तरिकाले बुझ्न सक्नेछौं ।

**बब—** तर, अहिले तपाईंले भगवान् श्रीकृष्णबाट सोझै जानकारी प्राप्त गर्नुभएको छैन? यो सबै गुरुपरम्पराबाट पुस्तक मार्फत आएको छ?

**श्रील प्रभुपाद—** त्यसमा कुनै भिन्नता छैन। यदि मैले "यो कलम हो" भन्दछु, तिमीले अर्कोलाई "यो कलम हो" भन्दछौ। अनि मेरो र उसको निर्देशमा के नै भिन्नता भयो?

**बब—** भगवान् श्रीकृष्णको कृपाले नै तपाईँलाई अहिले यो बुझ्न सम्मति दिइयो?

**श्रील प्रभुपाद—** यसलाई तिमीले भगवान् श्रीकृष्णको कृपा नै ठान, तर यदि त्यो यथारूप प्रदान गरिएको छ भने मात्र हो। जसरी हामीले भगवद्गीतामा पढाइरहेका छौं। भगवद्गीतामा भगवान् श्रीकृष्ण भन्नुहुन्छ— '**सर्वधमान् परित्यज्य मामेकं शरणं व्रज।**' "सबै प्रकारका धर्मलाई छोडेर केवल एक मात्र मेरो शरणमा आऊ।" अहिले हामी सबै कुरा छोडेर भगवान् श्रीकृष्णको शरणमा आऊ भन्दछौं। त्यसकारण भगवान्को निर्देशन र हाम्रो निर्देशनमा केही भिन्नता छैन। त्यसमा कुनै विचलन छैन। यदि तिमीले यसरी पूर्ण तरिकाले ज्ञान प्राप्त गऱ्यौ भने त्यो प्राप्त निर्देशज भगवान् श्रीकृष्णबाट सोझै प्राप्त गरेसमान राम्रो हुन्छ। तर, हामीले त्यसमा परिवर्तन गर्दैनौं।

**बब—** यदि मैले विनीत र श्रद्धापूर्वक प्रार्थना गरे भने के भगवान् श्रीकृष्णले मेरो प्रार्थना सुन्नुहुन्छ?

**श्रील प्रभुपाद—** अवश्य नै।

**बब—** मबाट उहाँले?

**श्रील प्रभुपाद—** हो, किनभने उहाँ तिम्रो हृदयमा हुनुहुन्छ र तिमीले प्रार्थना गरे पनि नगरे पनि तिमीले भनेको सदैव सुन्नुहुन्छ। यदि तिमीले

मूर्खतापूर्ण कार्य गरे पनि सुन्नहुन्छ। यदि तिमीले प्रार्थना गर्दछौ भने त्यो राम्रो कुरा हो, स्वागत गर्दछु।

**बब—** भगवान् श्रीकृष्णको सुनाइमा मूर्खतापूर्ण शब्द भन्दा प्रार्थना ठुलो हुन्छ?

**श्रील प्रभुपाद—** होइन, उहाँ परिपूर्णतम् हुनुहुन्छ। उहाँले सबै सुन्न सक्नुहुन्छ। यदि तिमीले बोलेनौ, केवल "म यो गर्दछु" भनेर सोच्यौ भने पनि उहाँले सुन्नुहुन्छ। **सर्वस्य चाहं हृदि सन्निविष्टो।** भगवान् श्रीकृष्ण प्रत्येकको हृदयमा निवास गर्नुहुन्छ।

**बब—** तर, मानिसले प्रार्थना गर्नुपर्दछ होइन र?

**श्रील प्रभुपाद—** मानिसको एउटा मात्र कार्य उहाँको प्रार्थना गर्नु नै हो।

**बब—** कसको कार्य?

**श्रील प्रभुपाद—** प्रत्येक जीवको कार्य र त्यो नै केवल कार्य हो, '**एको बहूनां यो विद्धाति कामान्**— वेदको यस्तै भनाइ छ।

**बब—** त्यसको अर्थ के हो?

**श्रील प्रभुपाद—** उहाँले सबैलाई सबै कुरा आपूर्ति गर्नुहुन्छ। उहाँले सबैलाई भोजन प्रदान गर्नुहुन्छ। त्यसैले उहाँ सबैका पिता हुनुहुन्छ। त्यसैले, तिमीले क्रिस्चियन बाइवलमा जस्तै "पिता हामीलाई दिनहुँ भोजन दिनुहोस्" भनेर प्रार्थना गर्दछन् त्यसरी नै "पिता मलाई यो दिनुहोस्" भनेर किन प्रार्थना नगर्ने? तिनीहरूले परम पिता भनेर स्वीकार गरेका छन् त्यो राम्रो नै हो। तर, हुर्केर ठुला भएका सन्तानले पितासँग केही माग्दैन केवल पिताको सेवा गर्न तयार हुन्छन्। त्यो नै भक्ति हो।

**बब—** मेरो प्रश्नको राम्रोसँग उत्तर दिनुभयो (सबै प्रेमले युक्त हाँसो हाँस्दछन्।)

**श्रील प्रभुपाद—** धन्यवाद !

**बब—** के म अर्को प्रश्न सोध्न सक्दछु?

**श्रील प्रभुपाद—** ए, निश्चय नै?

# ४

# प्रकृतिका तीन गुण

१९७२- फेब्रूवअरी २८ (क्रमशः)

**बब—** मैले पढे अनुसार जीवनमा तीन प्रकारका सत्त्व, रज, तम गुण हुन्छन्। तपाईँले यो रजगुण, तमगुण सत्त्वगुण के हो, त्यसको विशेष अर्थको व्याख्या गरिदिनुहुन्छ भन्ने आशा गर्दछु।

**श्रील प्रभुपाद—** सत्त्व गुणमा तिमीले ज्ञान वा अन्य कुरालाई बुझ्न सक्दछौ। यस अवस्थामा तिमीले भगवान् हुनुहुन्छ, उहाँले यस पृथ्वीको सृष्टि गर्नुभएको हो आदि र अन्य तथ्य कुराहरू जस्तैः सूर्य, चन्द्रमा छन् जस्ता पूर्ण ज्ञानलाई बुझ्न सक्दछौ। यदि कसैमा थोरै पनि ज्ञान छ र त्यो पूर्ण छैन भने पनि त्यो सत्त्व गुण हो। रजगुणमा मानिसले आफूलाई भौतिक शरीरसँग परिचय गराउँदछ र आफ्ना इन्द्रियहरूको सन्तुष्टिका लागि प्रयास गर्दछ। यो रजोगुण हो। तमो गुण भनेको पशु जीवन हो। तमोगुणमा व्यक्तिले भगवान् को हुनुहुन्छ ? भन्ने पनि जान्दैन, उदाहरणका लागि तिमीले पशुलाई एकातर्फ लग्यौ भने त्यो सजिलै जान्छ। यो नै अज्ञानता हो तर मानिसले भने त्यसको विरोध गर्दछ। यदि तिमीले बाख्रालाई पाँच मिनेट पछि मार्दैछौ तर तिमीले त्यसलाई घाँस दिए ऊ त्यो घाँस खान पाएर खुसी हुन्छ। एउटा बालक जस्तै यदि तिमीले उसलाई मार्ने योजना बनाएको भएपनि त्यो बालक अवोध भएकाले ऊ खुसी हुन्छ र हाँस्दछ । त्यो अज्ञानता वा तमो गुण हो।

**बब—** यस्तो गुणमा रहनु हाम्रो कर्मले निर्धारण गर्दछ त्यो सत्य हो ?

**श्रील प्रभुपाद—** हो। प्रकृतिका गुणसँगको संगतअनुसार तिम्रा क्रियाकलाप दूषित वा संक्रमित हुन्छन्। **कारणं गुण सङ्गोऽस्य सदसद्योनिजमन्मसु।** "मानिसले आफ्नो प्रकृतिका गुणसँगको संगत अनुसार उच्चस्तर वा निम्नस्तरको जन्म प्राप्त गर्दछ।" (भगवद्गीता १३.२२)

**बब—** त्यसो हो भने ठग्नु र अन्य त्यस्ता कार्य कुन गुण अन्तर्गत हुन्छन् ?
**श्रील प्रभुपाद—** ठग्ने क्रिया रज र तम गुणको मिश्रण हो। यदि एउटा व्यक्तिले अर्को व्यक्तिलाई ठग्दछ भने उसले केही प्राप्त गर्न चाहन्छ, ऊ उत्साहित हुन्छ। तर, यदि उसले हत्या गर्दछ भने यसो गरे बापत उसले दु:ख भोग्नुपर्दछ भन्ने उसलाई जानकारी हुँदैन। त्यसैले, यो रज र तम गुणको मिश्रित भाव हो।
**बब—** अनि कसैले कसैको सहायता गर्दछ भने त्यो के हो ?
**श्रील प्रभुपाद—** त्यो सत्त्व गुण हो।
**बब—** त्यो किन सत्त्व गुण हो ? जब ज्ञान हुन्छ अनि मात्र सत्त्व गुण हुन्छ भन्नुभएको थियो। के कसैलाई सहायता गर्नुले पनि ज्ञानलाई प्रतिनिधित्व गर्दछ ?
**श्रील प्रभुपाद—** यदि ऊ अज्ञानी छ र तिमीले उसलाई प्रबुद्ध बनाउने प्रयास गर्दछौं भने त्यो सत्त्व गुण हो।
**बब—** ज्ञान प्रदान गर्नु सत्त्व गुण हो ?
**श्रील प्रभुपाद—** हो।
**बब—** केवल सहायता गर्नु के हो ?
**श्रील प्रभुपाद—** त्यो पनि सत्त्व गुण हो।
**बब—** भिखारीसँग केही पनि छैन हामीले केही भिक्षा दियौं .....
**श्रील प्रभुपाद—** तर तिम्रो बोबरी सडकमा मानिसले भिकारीलाई दान दिन्छन् र उसले तुरुन्त रक्सी खरिद गरी पिउँछ, लड्दछ (सबै हाँस्दछन्)। यो दान हो, तर यो सत्त्व गुण होइन, तमोगुण हो।
**बब—** दान दिनु तमो गुण हो ?
**श्रील प्रभुपाद—** दान तीन प्रकारका छन्— सत्त्व, रज र तम। जहाँ दान दिन आवश्यक छ, त्यहाँ दिनु सत्त्व हो। जस्तै, यो कृष्णभावनामृत आन्दोलन। यदि कसैले यहाँ दान दिए त्यो सत्त्व गुण हो किनभने यसले कृष्णचेतना फैलाइरहेको छ। यो सत्त्व गुण हो। यदि कसैले केही पाउने

आशामा दान दिन्छ भने त्यो रजो गुण हो। यदि कसैले अनुपयुक्त स्थान र समयमा विनासम्मान, अनुपयुक्त व्यक्ति जस्तै बोबरीका भिकारीलाई दान दिनु तमो गुण हो। तर, भगवान् श्रीकृष्ण भन्नुहुन्छ- **यत्करोषि यदश्नासि यज्जुहोषि ददासि यत्।**" तिमी जे गर्दछौं, जे खान्छौं, जे अर्पण गर्दछौं वा दान दिन्छौं, जे तपस्या गर्दछौं, त्यो मलाई अर्पण गर।" (भगवद्गीता ९.२७) यदि भगवान् श्रीकृष्णले तिमीले अर्पण गरेको ग्रहण गर्नुभयो भने त्यो नै पूर्ण दान हो। जुन व्यक्ति भगवान् श्रीकृष्णको प्रतिनिधि हो, उसले ग्रहण गर्दछ भने पनि त्यो पूर्णता हो ।

**बब—** भोको व्यक्तिलाई भोजन दिनु कुन प्रकारको दान हो ?

**श्रील प्रभुपाद—** त्यो परिस्थितिमा निर्भर हुन्छ। उदाहरणका लागि, यदि चिकित्सकले रोगीलाई ठोस भोजन गर्न निषेध गरेको छ, तर रोगीले मलाई ठोस भोजन देऊ भनेर भन्दछ र तिमीले दानमा उसलाई ठोस भोजन दियौ भने तिमीले उसको लागि राम्रो काम गरेका हुँदैनन् त्यो तम गुण हो।

**बब—** के भक्तहरू कर्म एकत्रित गर्नेभन्दा पर हुन्छन्? यी भक्तहरूले कर्मको अनुभूति गर्दछन्? के यिनीहरू गुणअनुसार कार्य गर्दछन्? के यिनीहरू सत्त्व गुणमा छन्?

**श्रील प्रभुपाद—** यिनीहरू सत्त्व गुणभन्दा माथि छन्, अर्थात् शुद्ध सत्त्व। भक्तहरू भौतिक जगत्मा हुँदैनन्। उनीहरू आध्यात्मिक जगत्मा हुन्छन्। यो कुरा भगवद्गीता (१४.२६) मा उल्लेख छ।

*मा च योऽव्यभिचारेण भक्तियोगेन सेवते।*
*स गुणन्समतीत्यैतान्ब्रह्मभूयाय कल्पते।।*

"जुनसुकै परिस्थितिमा पनि अविचलित भावले पूर्णतया भगवद्भक्तिमा संलग्न हुने व्यक्ति भौतिक प्रकृतिका गुणहरूलाई तत्काल पार गरेर ब्रह्मको स्तरमा पुग्दछ।" भक्तहरू सत्त्व, रज र तम गुण केही पनि हुँदैनन्। उनीहरू यी गुणभन्दा पर पुगेका हुन्छन्।

**बब—** जुन भक्त अति नै श्रद्धावान् छ ऊ त्यहाँ पुग्दछ?

**श्रील प्रभुपाद—** हो पुग्दछ। तिनीहरू भक्त भएजस्तै तिमी पनि भक्त बन्न सक्दछौ। त्यो कठिन छैन। केवल तिमीले आफूलाई भगवान्को दिव्य प्रेममय सेवामा संलग्न गराउनु पर्दछ त्यति नै हो।

**बब—** भक्तिरहित सेवाको स्तर कस्तो हुन्छ?

**श्रील प्रभुपाद—** ए, त्यो सेवा होइन व्यापार हो (सबै हाँस्दछन्)। उदाहरणका लागि हामीले यहाँ मायापुरमा एकजना ठेकेदार राखेका छौं। त्यो सेवा होइन व्यापार हो। होइन र? कहिलेकाहीं तिनीहरूले विज्ञापन गर्दछन्— "हाम्रा ग्राहक हाम्रा स्वामी हुन्।" त्यसो गर्दछन्, होइन? तर, यस्ता पूलबुट्टाले युक्त शब्द "हाम्रा ग्राहक हाम्रा स्वामी" भने पनि यो व्यापार हो किनभने रकम भुक्तान नगरेसम्म कोही पनि योग्य ग्राहक हुँदैन। तर, सेवा यस्तो होइन। चैतन्य महाप्रभुले भगवान् श्रीकृष्णसँग प्रार्थना गर्दै भन्नुभएको छ— **यथा तथा वा विदधातु लम्पटो मत्प्राणनाथस्तु स एव नापरः।** "हजुरलाई जे मन लाग्दछ सोही गर्नुहोस्, तर हजुर मेरा पूजनीय भगवान् हुनुहुन्छ।" यो नै सेवा हो। "म हजुरबाट केही पाउन अनुरोध गर्दिन।" यो सेवा हो। यदि तिमी बदलामा केही चाहन्छौ भने त्यो व्यापार हो।

**बब—** म भगवान् सम्बन्धीत अरू ज्ञान प्राप्त गर्न चाहन्छु र भगवान्को उपस्थितिलाई महसुस गर्न चाहन्छु। जीवन को अर्थ योबाहेक पनि केही हो भन्ने मैले महसुस गर्दछु।

**श्रील प्रभुपाद—** हो, यदि तिमीले यो मानवरूपले युक्त जीवनको दुरुपयोग गऱ्यौ भने त्यो ठुलो नोक्सानी हो। मानवजीवन यस भौतिक अस्तित्वको वन्धनबाट मुक्त हुनका लागि जीवलाई दिइएको ठुलो अवसर हो।

**बब—** मैले यी प्रश्न सोध्न पाएकोमा अहो भाग्यको अनुभव गरेको छु।

**श्रील प्रभुपाद—** हो तिमीले अरू धेरै अध्ययन गर्न सक्दछौं। प्रश्नोत्तरको आवश्यकता परिरहन्छ। त्यसले, सबैलाई लाभ हुन्छ। सूत गोस्वामीले भन्नुभएको छ (श्रीमद्भागवत १.२.५)

*मुनयः साधु पृष्टोऽहं भवद्भिर्लोकमङ्गलम्।*
*यत्कृतः कृष्णसम्प्रश्नो येनात्मा सुप्रसीदति।।*

'हे मुनिहरू ! तपाईंले अहिले मलाई जुन प्रश्न गर्नुभयो, ती सबै उत्तम छन् किनभने ती भगवान् श्रीकृष्णसँग र संसारका हितसँग सम्बन्धित छन्। यस्ता प्रश्न नै मानिसलाई सन्तुष्ट गर्न सक्षम हुन्छन्।" भगवान् श्रीकृष्णसँग सम्बन्धित प्रश्न अति उत्तम हुन्छन्। जब हामी भगवान् श्रीकृष्णका बारेमा वार्तालाप गर्दछौ र सुन्दछौं। त्यो दुवै प्रश्न र उत्तर लोक मङ्गलम अर्थात् सबैका लागि कल्याणकारी हुन्छन्।

**बब—** म भक्तिमय जीवनतर्फ आकर्षित भएको छु, तर अहिले पनि मेरो सम्बन्ध घरसँग छ। विवाह हुदैछ म कसैसँग विवाहका लागि सम्बन्धित भइसकेको छु।

**श्रील प्रभुपाद—** होइन, होइन। यस्ता धेरै विवाहित छन् (श्यामसुन्दरतर्फ संकेत गर्नुहुन्छ) उनी पनि विवाहित हुन्। विवाहित जीवन अवरोध हुँदैन। मैले तिमीलाई भनिसके आध्यात्मिक जीवनमा ब्रह्मचारी, गृहस्थ, वानप्रस्थ र संन्यास हुन्छन्। ब्रह्मचारी जीवन पछि उसले विवाह गर्न सक्दछ तर त्यो वाध्यात्मक हुँदैन। कोही नैष्ठिक ब्रह्मचारी अर्थात् आजीवन ब्रह्मचर्यमा बस्न सक्दछ। तर, ब्रह्मचारीले पनि विवाह गर्न सक्दछ। त्यसपछि वानप्रस्थ जीवन हुन्छ। त्यसको अर्थ ऊ पारिवारिक जीवनबाट केही मुक्त हुन्छ र पति पत्नी अलग भएर बस्दछन्। त्यस समय यौन जीवन हुन हुँदैन। जब ऊ पारिवारिक जीवनबाट मुक्त भएर वैराग्य प्राप्त गर्दछ, अनि उसले संन्यास लिन सक्दछ।

**बब—** के संन्यासले आफ्नी पत्नीलाई पूर्णतया बिर्सनुपर्दछ ?

**श्रील प्रभुपाद—** हो, यदि तिमीले बिर्सनु चाह्यौं भने बिर्सन कठिन हुँदैन। दृष्टिबाट ओझेल भएपछि मनबाट पनि ओझेल हुन्छ। (सबै हाँस्दछन्) मैले, जस्तैः मेरी पत्नी, सन्तान नातिनातिना सबै थिए, तर दृष्टिबाट ओझेल भएपछि मनबाट पनि ओझेल भए त्यति नै हो। त्यसकारण, वानप्रस्थ संन्यास सबै वैदिक पद्धतिमा राम्रोसँग व्यवस्थित गरिएको छ।

# ५

# पवित्र हुनु

१९७२ फेब्रूवअरी २९

**बब—** मलाई मेरो प्रश्न सोध्नु दिनुभएकोमा धन्यवाद।

**श्रील प्रभुपाद—** त्यो नै मेरो उद्देश्य हो। मानिसले भगवान्सम्बन्धी विज्ञानलाई बुझ्नुपर्दछ। जबसम्म हामीले परम भगवान्सँग सहयोगको कार्य गर्दैनौं हाम्रो जीवनमा अवरोध आउँदछ। मैले **धेरै पटक** उदाहरण दिएको छु। यन्त्रको एउटा पूर्जा खस्यो भने त्यो पूर्जा अर्थहीन हुन्छ तर यन्त्रमा रहे अर्थपूर्ण हुन्छ। त्यसरी नै, हामी भगवान्का अशं हौं। भगवान्रहित हाम्रो के अर्थ हुन्छ? कुनै अर्थ नै हुँदैन। जब हामी भगवान् सँगको आफ्नो आसक्तिमा फर्कन्छौं अनि मात्र हाम्रो केही अर्थ हुन्छ।

**बब—** मैले आज एउटा युवकलाई भेटेँ। उसले मायापुरमा हिप्पीहरू छन् भन्ने सुनेर आएको रहेछ।

**श्रील प्रभुपाद—** के ऊ भारतीय हो?

**बब—** हो भारतीय हो। ऊ यहीँ नजिकै बस्दछ र राम्रो अङ्ग्रेजी पनि बोल्दछ। जब ऊ सानो थियो उसले कठोरतापूर्वक दिनहुँ माता कालीको पूजा गर्दथ्यो। तर, जब बाढी आयो र मानिसको दुःख देख्यो उसको श्रद्धा हरायो र अहिले ऊ कुनै धर्ममा छैन। अहिले उसले मानिसबीच प्रेमको विकास गर्ने गर्दछ र उसले यसमा सुख पाएको छ भनेर भनेका छन्। उसको जीवनमा भगवान् धर्म समाहित गर भनेर मैले के भन्ने हो सोचिरहेको छु। मृत्यु पश्चात आफू भगवान्को अङ्ग हुन्छु वा हुन्न भनेर उनी भन्दै थिए तर उनी त्यस बारेमा अहिले चिन्तित हुनु आवश्यक छैन। विभिन्न प्रकारका धर्महरूका अनुभवले आफू थकित भएको र तिनले केही काम गरेनन् भन्दथे। यो किन सोधेको भने जब म अमेरिका

फर्कन्छु, जहाँबाट म आएको हुँ त्यहाँ यस्तै धेरै व्यक्तिहरू छन्। जसरी यिनले काली पूजा गर्दथे त्यसरी नै उनीहरूले पनि धेरै धर्मका अनुभव गरेका छन्, तर कसैले पनि कुनै काम गर्दैन। त्यसैले उनीहरूलाई प्रयास गर्न उपयुक्त छ भनेर कसरी सम्झाउने ?

**श्रील प्रभुपाद—** अहिले तिमीले त्यस्तो कुनै प्रयास नगर। सर्वप्रथम आफू विश्वस्त होऊ, अनि उसलाई विश्वस्त गर्ने प्रयास गर। चैतन्य महाप्रभुको निर्देश छ जब आफ्नो जीवनमा सफलता प्राप्त गर्दछौ अनि अरूको जीवनमा कल्याण गर्न सक्दछौ।

*भारत भूमिते हइल मनुष्य-जन्म यार*
*जन्म सार्थक करि 'कर पर-उपकार*

पहिला आफ्नो जीवन पूर्ण बनाऊ अनि अरूलाई सिकाउने प्रयास गर।

**बब—** जबसम्म सदैव कृष्णचेतनामा रहँदैन, तबसम्म सुखी हुन सकिंदैन भनेर भक्तहरू मलाई भन्दै थिए। तर, अहिले म सुखी छु।

**श्रील प्रभुपाद—** अहिले, सधैँ होइन ?

**बब—** हो।

**श्रील प्रभुपाद—** तर, यदि तिमी कृष्णभक्त भयौ भने सधैँ सुखी हुने छौ।

**बब—** कृष्णभक्त नभएसम्म सुखको अनुभव गर्न सकिंदैन भनेर उनीहरूले संकेत गरेका छन्।

**श्रील प्रभुपाद—** त्यो तथ्य नै हो। उदाहरणका लागि यदि तिमी जमिनमा रहने प्राणी हौ, तर तिमीलाई पानीमा राखियो भने तिमी कुनै पनि अवस्थामा सुखी हुन सक्दैनौ। तर, तिमीलाई पुनः जमिनमा ल्याइयो भने तिमी सुखी हुन्छौ। त्यसरी नै, हामी भगवान् श्रीकृष्णका अंश हौं। त्यसैले जबसम्म अंशको जस्तो कार्य गर्दैनौं तबसम्म सुखी हुन सक्दैनौं। पहिला भनेको जस्तै अर्को उदाहरण— यन्त्रको पूर्जा यन्त्रबाट झरेपछि अर्थहीन हुन्छ तर यन्त्रमा जोड्नासाथ अर्थपूर्ण हुन्छ। हामी भगवान् श्रीकृष्णका अंश हौं हामी भगवान् श्रीकृष्णसँग जोडिनु नै पर्दछ। तिमी तुरुन्त भगवान्

श्रीकृष्णसँग आफ्नो चेतनाद्वारा यस्तो सोच्दै "म भगवान् श्रीकृष्ण को हुँ र भगवान् श्रीकृष्ण मेरा हुनुहुन्छ" जोडिन सक्दछौ, त्यति मात्र हो।

**बब—** हामी भगवान् श्रीकृष्णका अंश हौं?

**श्रील प्रभुपाद—** हो, हौं। सबै वस्तु भगवान् श्रीकृष्णका अंश हुन् किनभने सबै वस्तु भगवान् श्रीकृष्णका शक्तिबाट उत्पन्न भएका हुन् र सबै भगवान् श्रीकृष्णका शक्ति हुन्।

**बब—** म भगवान्को नजिक पुगे भनेर कसरी अनुभव गर्ने? म मन्दिर आउँछु अनि गइहाल्दछु मैले यहाँबाट के कति लगेँ मलाई नै निश्चित छैन।

**श्रील प्रभुपाद—** तिमी शुद्ध हुनुपर्दछ, त्यसको लागि धेरै समय लाग्दैन। छ महिनाभित्र नै आफूले प्रगति गरेको अनुभव गर्न सक्दछौ। तर, तिमीले यी युवायुवतीले जस्तै नियम र विधानको पालना गर्नुपर्दछ। अनि सबै ठिक हुन्छ।

**बब—** हो, मैले बुझ्दछु।

**श्रील प्रभुपाद—** यिनीहरूमा नाइटक्लब वा सिनेमा हेर्ने प्रवृत्ति छैन। यिनीहरूले सबै अनर्थ कर्म गर्न बन्द गरे। यो सम्पूर्ण मानवजीवन शुद्धता प्राप्त गर्नका लागि हो। **तपो दिव्यं पुत्रका येन सत्त्वं शुद्धयेस्माद ब्रह्मसौख्य त्वनन्तम्।** भगवान् ऋषभदेव यहाँ भन्नुहुन्छ, हामीले आफ्नो अस्तित्व शुद्ध र पवित्र बनाउन तपस्या गर्नुपर्दछ। सत्त्वको अर्थ अस्तित्व हुन्छ र ऊ भनेको अनन्त दिव्य सुखको अवस्थामा आइपुग्नु हो। यदि तिमीले तिम्रो अस्तित्व शुद्ध पवित्र बनाएनौ भने तिमीले यो वा त्यो शरीर परिवर्तन गरिरहनुपर्दछ। त्यो कहिले उच्चस्तरको र कहिले निम्नस्तरको हुनेछ। उदाहरणका लागि यदि तिमीले रोगको उपचार गरेनौ भने त्यसले तिमीलाई धेरै प्रकारको दुःख दिन्छ। त्यसरी नै, यदि तिमीले आफ्नो अस्तित्व शुद्ध पवित्र गर्‍यौ भने तिमी यो वा त्यो शरीरमा देहान्तर गरिरहन्छौ र त्यो शरीर अहिलेको सुविधाले युक्त अमेरिकी शरीर नहुन पनि सक्दछ। त्यसकारण, मानवले आफ्नो अस्तित्व शुद्ध र पवित्र

बनाउन अति आवश्यक छ। जबसम्म तिमीले आफ्नो शरीर शुद्ध पवित्र बनाउँदैनौ तबसम्म सुखका लागि तीव्र इच्छुक हुन्छौं तर तिमी सधैँ सुखी हुन सक्दैनौ।

**बब—** जब म मेरो कार्यस्थल न्युयोर्क जान्छु, म शुद्ध पवित्र हुन्छु होला भन्ने आशा गर्दछु तर तपाईँका शिष्य समान शुद्ध पवित्र हुन्छु भन्ने निश्चित भने छैन। मैले त्यस्तो गर्न सक्दछु जस्तो लाग्दैन।

**श्रील प्रभुपाद—** यिनीहरूले जस्तो गरेका छन् त्यस्तो तिमीले पनि गर्न सक्दछौ। सुरूमा यिनीहरू शुद्ध र पवित्र थिएनन्, तर अहिले पवित्र भए। त्यसरी नै, तिमी पनि शुद्ध पवित्र हुन सक्दछौ। उदाहरणका लागि बाल अवस्थामा तिमी शिक्षित थिएनौ, तर अहिले शिक्षित छौ। यदि तिमी गम्भीर छौ भने तिमीले आफूलाई जहाँ पनि शुद्ध र पवित्र राख्न सक्दछौ। तिमी अमेरिका, भारत जहाँ बसे पनि केही फरक पर्दैन। तर, आफूलाई कसरी शुद्ध पवित्र राख्ने हो, त्यो जान्नुपर्दछ त्यति नै हो।

**बब—** तपाईँको भनाइको अर्थ कृष्णभक्तिको सिद्धान्तको पालना गर्नु हो ?

**श्रील प्रभुपाद—** हो, उदाहरणका लागि म अमेरिका गएँ। म अमेरिकामा भए पनि भारतमा भए पनि म एउटै हुँ।

**बब—** मैले गत नोभेम्बरमा तपाईँसँग पहिलो पटक भेटेपछि केही हदसम्म पालना गर्ने प्रयास गरिरहेको छु।

**श्रील प्रभुपाद—** ए, यदि तिमी गम्भीर छौ भने कठोरतापूर्वक पालना गर्नुपर्दछ।

**बब—** हुन्छ, हुन सक्दछ, मैले अहिले यही भन्न सक्दछु मजस्तो मूर्खले यति मात्र भन्न सक्दछु। तर, मैले के अनुभव गरेँ त्यो भन्दछु।

**श्रील प्रभुपाद—** होइन, मूर्ख होइन। म तिमीलाई मूर्ख भन्दिनँ केवल अपूर्ण भन्दछु।

**बब—** ए (हाँस्दछन्) अपूर्ण। तर, मलाई भन्न दिनुहोस्। म तपाईँका

भक्तहरूको सम्मान र प्रशंसा गर्दछु, तर म तिनीहरूसँग सहभागी भएको मैले अनुभव गरेको छैन। तर, ममा उनीहरूसँग सहभागी हुने तीब्र इच्छा छ। म केवल के राम्रो हो, त्यही गर्न चाहन्छु अर्थात् भगवान्‌को नजिक हुन चाहन्छु। यदि मैले अर्को जन्ममा राम्रो जीवन प्राप्त गर्न सकेँ भने म सन्तुष्ट हुने थिएँ।

**श्रील प्रभुपाद—** धेरै राम्रो।

**बब—** मेरो सोचाइमा यो पनि भौतिकतामा टाँसिनु नै हो।

**श्रील प्रभुपाद—** यदि तिमीले यिनीहरूको चरणको अनुसरण गर्‍यौ भने तिम्रा इच्छा पूरा हुन्छन्। हामी मानिसलाई कसरी शुद्ध र पवित्र भएर सुखी हुन सकिन्छ त्यसको प्रशिक्षण दिइरहेका छौं। त्यो नै हाम्रो उद्देश्य हो। प्रत्येक व्यक्ति सुखी भएको हामी हेर्न चाहन्छौं। **सर्वे सुखिनो भवन्तु।** मानिसलाई आफू कसरी सुखी हुने हो ज्ञान नै छैन। उनीहरू सुखी हुने सामान्य मार्ग पनि अपनाउन चाहन्नन्। उनीहरू आफैँ मार्ग निर्माण गर्दछन्, त्यो नै समस्या भएको छ। त्यसकारण ऋषभदेवले आफ्ना छोराहरूलाई यस्तो उपदेश दिनुभएको छ- "हे प्रिय छोराहरू ! दिव्यताको अनुभूतिका लागि तपस्या गर।" प्रत्येकले तपस्या गरिरहेका छन्। मैले एउटा युवकलाई चिन्दछु, ऊ व्यापार व्यवस्थापनसम्बन्धी अध्ययनका लागि विदेश जानुपर्ने भयो। अहिले ऊ राम्रो पदमा कार्यरत छ। यसरी, प्रत्येक व्यक्ति क्षणिक भौतिक सुखका लागि तपस्या गरिरहेका छन्। स्थायी सुखका लागि तपस्या किन नगर्ने ?

तिमीले आफ्नो शरीर र अस्तित्वलाई शुद्ध र पवित्र बनाउनुपर्दछ। जति धेरै पटक तिमीले भौतिक शरीर स्वीकार गर्दछौ, त्यति धेरै पटक तिमीले शरीर परिवर्तन गर्नुपर्दछ। तर, जब तिमीले आध्यात्मिक शरीर प्राप्त गर्दछौ अनि अन्य शरीर परिवर्तन गर्ने प्रश्न आउँदैन। तिमीसँग पहिला नै आध्यात्मिक शरीर थियो तर अहिले भौतिक संक्रमणले गर्दा भौतिक शरीरको विकास गरेका छौ। तर, आध्यात्मिक जीवनको संगत गर्‍यौं भने

हामीले आध्यात्मिक शरीरको विकास गर्नेछौं। यदि तिमीले फलामको छडलाई आगोमा राख्यौं भने त्यो आगो समान बन्दछ होइन र?

**बब—** हो, बन्दछ।

**श्रील प्रभुपाद—** जब त्यो फलामको छड तातो रातो हुन्छ त्यसलाई छुन सकिंदैन त्यो बल्न सुरू गर्दछ। त्यसले आफू फलाम भएपनि आगोको गुण धारण गर्दछ। त्यसरी नै यदि तिमीले आफूलाई सदैव कृष्णभक्तिमा संलग्न गरायौं भने तिम्रो शरीर आध्यात्मिक बन्दछ र त्यसले आध्यात्मिकताले युक्त कार्य गर्दछ हुन त त्यो शरीर भौतिक नै हो। अनि त्यसले अन्य भौतिक इच्छा गर्दैन।

**बब—** यसले कसरी कार्य गर्दछ?

**श्रील प्रभुपाद—** आज छ जना युवकले दीक्षा लिए यो एउटा प्रक्रिया हो। तिनीहरूले यो प्रक्रिया अपनाए जुन ज्यादै सरल छ। तिमीले हाम्रा चार नियमको पालना गर्दै यो मालामा हरे कृष्णको जप गर्नुपर्दछ जुन ज्यादै सजिलो छ।

**बब—** ए ! तर केही नियमको पालना गर्दछु, सबै होइन।

**श्रील प्रभुपाद—** केही भन्नुको अर्थ? हाम्रा चार नियम छन्, केहीको अर्थ तीन वा दुई कति हो?

**बब—** दुई वा तीन

**श्रील प्रभुपाद—** किन अरू नगर्ने?

**बब—** होइन, होइन मेरो भनाइमा एक वा दुईको मात्र पालना गर्दछु भन्ने हो।

**श्रील प्रभुपाद—** (हाँस्नुहुन्छ) अरू तीनको पालना किन नगर्ने? के कठिनाइ भयो? तिमीले कुन पालना गर्दछौ?

**बब—** म करिबकरिब शाकाहारी भएँ, तर अण्डा खान्छु।

**श्रील प्रभुपाद—** ए, त्यो पनि पुरा भएन।

**बब—** होइन, जब मैले गत नोभेम्बरमा तपाईंलाई भेटें त्यसपछि म शाकाहारी भएको छु।

**श्रील प्रभुपाद—** शाकाहारी हुनु कुनै योग्यता होइन। परेवा पनि शाकाहारी नै हो। बाँदर पनि शाकाहारी नै हो, तर यो सबैभन्दा अनुपयोगी र उपद्रव गर्ने जन्तु हो।

**बब—** मैले यो पनि केही प्रगति हो भन्ने अनुभव गरेँ, किनभने पहिला यो केही कठिन थियो अहिले सजिलो भएको छ।

**श्रील प्रभुपाद—** यदि, तिमीले कृष्णभावनामृतको प्रक्रिया अपनाउन चाहने हो भने, तिमी सबै नियमप्रति प्रतिबद्ध हुन आवश्यक हुन्छ। अन्यथा त्यो सम्भव हुँदैन।

**बब—** हजुर। जब म विहारमा आफ्ना साथीहरूसँग बस्दछु, बेलुका लामखुट्टेसँग लड्नेबाहेक हाम्रो अन्य कुनै काम हुँदैन। अनि उनीहरूले "गाँजा पिउने? भनेर सोध्दथे मैले पनि अन्य काम छैन हुन्छ, भन्दथे। अनि हामी बसेर गाँजा पिउँदै बेलुका रमाइलो गर्दथ्यौं। हामी यस्तो प्रत्येक दिन गर्दथ्यौं हामी त्यसको लतमा पऱ्यौं जब हामीले आफैंले आफैंलाई नोक्सान गरिरहेका छौं भन्ने महसुस गऱ्यौं अनि पिउन छोड्यौं। तैपनि अहिले पनि कुनै अवसरमा हामी

**श्रील प्रभुपाद—** तिमी हामीसँग बस्नुपर्दछ। त्यसपछि तिम्रा मित्रले तिमीलाई गाँजाका बारेमा तिम्रो के विचार छ? (बब हाँस्दछन्) भनेर सोध्ने छैनन्। भक्तहरूको संगत गर। हामीले मानिसलाई हाम्रो सङ्गत गर्ने अवसर प्रदान गर्न केन्द्र सञ्चालन गर्दै छौं। हामीले मायापुरमा यति धेरै जमिन किन खरिद गरेका छौं? जुन व्यक्ति कृष्णभक्तितर्फ लाग्न गम्भीरतापूर्वक इच्छुक छ ऊ यहाँ आएर हामीसँग बस्न सक्दछ। संगत गर्नु निकै प्रभावकारी हुन्छ। यदि तिमीले जड्याहाँको सङ्गत गरे तिमी पनि जड्याँहा हुन्छौ साधुको सङ्गत गरे साधु बन्दछौ।

**श्यामसुन्दर—** ऊ बम्बइ आएर तपाईंसँग बस्न सक्दछ।

**श्रील प्रभुपाद—** हो, तिमी बम्बइ आएर हामीसँग बस्न सक्दछौ। तर, ऊ गाँजा पिउने साथि चाहन्छ त्यो नै समस्या भयो।

**बब—** म अन्य केही विषयमा तपाईंसँग प्रश्न गर्न चाहन्छु, त्यसपछि म यस विषयमा फर्कन्छु। म अति नै छु भनेर केवल म आफ्नो बारेमा सोच्दछु। त्यसकारण, मैले भगवान्‌का बारेमा धेरै सोच्न सक्दिन। म आफूलाई धेरै स्थानमा व्यस्त भएको ठान्दछु। त्यसैले, मैले आफ्ना विषयमा सोच्न छोडेर अरूका बारेमा र अन्य महत्त्वपूर्ण कुराका बारेमा कसरी सोच्न सक्दछु ?

**श्रील प्रभुपाद—** जस्तै, यी भक्तहरूले गरेका छन्।

**बब—** (हाँस्दछन्) तपाईंले मलाई नै जे भन्नुभयो, त्यो म पवित्र भएर भक्त बन्ने मार्ग हो भन्ने मैले ठानेको छु।

**श्रील प्रभुपाद—** के तिमी हिचकिचाइरहेका छौ ?

**बब—** ए म .....

**श्रील प्रभुपाद—** भक्त बन्न ज्यादै कठिन छ ?

**बब—** मेरा लागि कठिन छ। मैले त्यति धेरै चाहना गरेको पनि छैन। पहिला मलाई भक्तहरूले आफ्नो भौतिक जीवन छोडयौ भने .... ? मलाई वर्णन गरिएका चार नियमको अर्थ भौतिक जीवन छोड्नु हो, त्यो मैले देखेँ थाहा पाएँ। यो स्थानमा तिनीहरू ......

**श्रील प्रभुपाद—** भौतिक जीवन भनेर तिम्रो अर्थ के हो ? (बब मौन बस्दछन्) म यो विछ्यौनामा बसेको छु यो भौतिक हो कि आध्यात्मिक ?

**बब—** भौतिक

**श्रील प्रभुपाद—** त्यसो हो भने हामीले भौतिक जीवन कसरी छोड्यौं ?

**बब—** यसलाई कसरी भनौं ? त्यसको अर्थ भौतिक प्राप्तिको कामना हो भन्ने म सोच्दछु।

**श्रील प्रभुपाद—** भौतिक के हो ?

**बब—** भौतिक लाभका लागि कार्य गर्नु र सम्पूर्ण भौतिक इच्छाहरू नछोड्नु।

**श्रील प्रभुपाद—** जब तिमी तिम्रा इन्द्रियहरूको तृप्तिमा लाग्दछौ, त्यो

नै भौतिक जीवन हो। तर, जब तिमी भगवान्को सेवा गर्ने इच्छा गर्दछौ, त्यो आध्यात्मिक हो। भौतिक जीवन र आध्यात्मिक जीवनमा यही अन्तर छ। वर्तमानमा हामी आफ्ना इन्द्रियको सेवा गर्ने प्रयास गरिरहेका छौं। हामीले आफ्ना इन्द्रियको सेवा गर्नुको सट्टा भगवान्को सेवा गर्नुपर्दछ त्यो नै आध्यात्मिक जीवन हो। हाम्रो र अन्य व्यक्तिको क्रियाकलापमा के भिन्नता छ? तिनीहरूले जेजे वस्तु प्रयोग गरेका छन् जस्तै- टेबल, कुर्सी, बिछ्यौना, टेप रिकर्डर, टाइपराइटर ती सबै हामीले पनि प्रयोग गरिरहेका छौं के भिन्नता छ? के भिन्नता छ भने हामी यी सबै वस्तु भगवान् श्रीकृष्णका लागि प्रयोग गरिरहेका छौं।

**बब—** भक्तहरूले भनेअनुसार उनीहरूले आफ्ना इन्द्रिय सुख त्यागेर त्यसको सट्टामा आध्यात्मिक सुख प्राप्त गरेका छन् भन्दछन्, तर मैले त्यो अनुभव गर्न सकेको छैन।

**श्रील प्रभुपाद—** जब तिमीले भगवान् श्रीकृष्णलाई प्रसन्न गर्ने इच्छा गर्दछौ, अनि मात्र आध्यात्मिक सुख प्राप्त गर्न सक्नेछौ। त्यो नै आध्यात्मिक सुख हो। उदाहरणका लागि आमा आफ्ना सन्तानलाई दुध चुसाउँदा प्रसन्न हुन्छिन्। आफूले खाएकी हुन्नन् तर आफ्नो छोराले राम्रोसँग खाएको देखेर उनी प्रसन्न हुन्छिन्।

**बब—** ए, भगवान्लाई प्रसन्न गर्नु नै आध्यात्मिक सुख हो।

**श्रील प्रभुपाद—** आध्यात्मिक सुख भनेको भगवान् श्रीकृष्णलाई प्रसन्न गर्नु हो।

**बब—** भगवान् श्रीकृष्णलाई प्रसन्न गर्नु?

**श्रील प्रभुपाद—** हो, भौतिक सुख भनेको इन्द्रियलाई प्रसन्न गर्नु हो। यही भिन्नता छ। जब तिमी भगवान् श्रीकृष्णलाई प्रसन्न गर्ने प्रयास गर्दछौ, त्यो नै आध्यात्मिक सुख हो।

**बब—** मेरो विचारमा भगवान्लाई प्रसन्न गर्नु ...........

**श्रील प्रभुपाद—** भगवान्लाई प्रसन्न गर्ने आफ्नै बाटोको निर्माण

नगर। अनुमान गरौं, म तिमीलाई प्रसन्न गर्न चाहन्छु। अनि म तिमीलाई सोध्दछु, "मैले तिम्रो सेवा कसरी गर्न सक्दछु?" तर, मैले आफ्नै अनुसार सेवा निर्माण गर्न सक्दिनँ। त्यो तरिकाले प्रसन्न गराउने होइन। अनुमान गर मलाई एक गिलास पानी आवश्यक छ। तर, तिमीले कल्पना गरेर "यदि मलाई दूध दिए स्वामीजी अरू बढी प्रसन्न हुनुहुन्छ भनेर विचार गऱ्यौं भने त्यसले मलाई प्रसन्नता प्रदान गर्दैन। यदि तिमी मलाई प्रसन्नता दिन चाहन्छौं भने त्यसको बारेमा मसँग सोध्नुपर्दछ, "म तपाईँलाई कसरी प्रसन्न गर्न सक्दछु?" यदि तिमीले मैले भनेअनुसार कार्य गरे मात्र म प्रसन्न हुन्छु।

**बब—** भगवान् श्रीकृष्णलाई प्रसन्न गर्नु भनेको भगवान् श्रीकृष्णका भक्त बन्नु हो।

**श्रील प्रभुपाद—** भक्त भनेको त्यो हो, जसले सदैव भगवान् श्रीकृष्णलाई प्रसन्न गराउँदछ। उसको अन्य कुनै कार्य नै हुँदैन। ऊ नै भक्त हो।

**बब—** 'हरे कृष्ण' जपकीर्तनका बारेमा मलाई अरू बढी केही भन्न सक्नुहुन्छ? मैले केही समय देखी जपिरहेको छु तर लगातार होइन। केही संख्यामा कहिले जप्दछु कहिले जप्दिनँ। मैले जपमाला भर्खरै प्राप्त गरें, कुनै समयमा जप गर्दा सहज अनुभव गर्दछु भने कहिले सहजता अनुभव गर्दिन। मैले सही जप नगरेको पनि हुन सक्दछु। मलाई थाहा छैन।

**श्रील प्रभुपाद—** हो, सबैको कुनै प्रक्रिया हुन्छ। तिमीले त्यो प्रक्रिया अपनाउनुपर्दछ।

**बब—** भक्तहरूले जप गर्दा परम आनन्दको अनुव गर्दछौं भनेर भन्दछन्

**श्रील प्रभुपाद—** हो, जति तिमी शुद्ध पवित्र हुन्छौं, त्यति नै धेरै परम आनन्दको अनुभव गर्न सक्दछौ। यो जपप्रक्रिया शुद्ध प्रवित्र गर्ने प्रक्रिया हो।

# ६

# पूर्ण भक्त

१९७२, फेब्रूवअरी १९ साँझ

**बब—** श्रील प्रभुपाद, आज बिहान हामीले कृष्णभक्तिमा तपको अभ्यास गर्ने बारेमा वार्तालाप गरेका थियौं। के यस बारेमा अरू विस्तृत वर्णन गर्न सक्नुहुन्छ ?

**श्रील प्रभुपाद—** सक्दछु, आध्यात्मिक गुरुको निर्देशमा तपस्याको अभ्यास गर्नुपर्दछ। तपस्या कसरी गर्ने तिमीसँग ज्ञान छैन, तर जब तिमीले आध्यात्मिक गुरु स्वीकार गर्दछौ, अनि तिमीले उहाँका आदेशको पालना गर्नुपर्दछ र त्यो नै तपस्या हो।

**श्यामसुन्दर—** यदि तिमी तपस्याको अभ्यास गर्न चाहन्छौ भने पनि तिमीले गर्नु नै पर्दछ।

**श्रील प्रभुपाद—** हो, तिमीले गर्नु नै पर्दछ किनभने तिमी आध्यात्मिक गुरुमा पूर्ण शरणागति हुनुपर्दछ। उहाँको आदेश नै अन्तिम हुन्छ। यदि तिमीलाई यसो गर्न मन नपरे पनि उहाँलाई प्रसन्न गर्न यस्तो गर्नुपर्दछ।

**श्यामसुन्दर—** हो।

**श्रील प्रभुपाद—** तर, तिमीलाई यस्तो मन पर्दैन (उहाँ हाँस्नुहुन्छ) कसैलाई पनि उपवास बस्न मन लाग्दैन, तर आध्यात्मिक गुरुले "आज उपवास हो" भन्नुभयो भने तिमी के गर्न सक्दछौ (श्यामसुन्दर हाँस्दछन्) ? शिष्य त्यस्तो व्यक्ति हो, जो स्वतः आध्यात्मिक गुरुको आदेश स्वेच्छाले स्वीकार गर्न तयार हुन्छ। त्यो नै तपस्या हो।

**श्याम सुन्दर—** भौतिक संसारका धेरै जसो मानिसहरू पूर्णतया भौतिक जीवनप्रति अनुरक्त हुन्छन्। त्यसैले, तपस्या वा शारीरिक दुःख चाहदैनन्, तर तिनीहरूले त्यो सबै भोग्नुपर्दछ। प्रकृतिले बलपूर्वक तिनीहरूलाई भोग्न लगाउँदछिन्।

**श्रील प्रभुपाद—** बलपूर्वक तपस्या गराउनु राम्रो होइन। स्वेच्छाको तपस्याले सहायता गर्दछ।

**श्याम सुन्दर—** यदि तिमीले स्वेच्छाले तपस्या गरेनौ भने वलपूर्वक तिमीले तपस्या गर्नुपर्दछ।

**श्रील प्रभुपाद—** पशु र मानिसबीचको भिन्नता यही हो। पशुले स्वेच्छाले तपस्या स्वीकार गर्न सक्दैन तर मानिसले स्वीकार गर्न सक्दछ। अनुमान गरौं मिठाइको पसलमा राम्रा मिठाइ हुन्छन्। मानिसले त्यो खान चाहन्छ, तर ऊ सँग पैसा छैन भने उसले आफूलाई नियन्त्रण गर्दछ। तर, जब कुनै गाई आउछिन् उसले तुरुन्त त्यसमा आफ्नो मुख राख्दछिन्। तिमीले लट्ठीले पिटे पनि उनले त्यो सहन्छिन्। त्यसकारण पशुले तपस्या गर्न सक्दैन। तर, हाम्रो तपस्या धेरै राम्रो छ। हामी 'हरे कृष्ण'को जप र कीर्तन गर्दछौं, नाच्दछौं अनि भगवान् श्रीकृष्णले प्रदान गर्नुभएका धेरै स्वादिष्ट प्रसाद ग्रहण गर्दछौं, त्यत्ति नै हो। तिमी यस्तो कीर्तन गर्ने, नाच्ने र राम्रोसँग प्रसाद ग्रहण गर्ने तपस्यालाई किन स्वीकार गर्दैनौं ? हामीले तपस्याको पालना गर्दछौं। भगवान् श्रीकृष्णले हामीलाई राम्रा वस्तु प्रदान गर्नुहुन्छ। हामीले कुनै हानी व्योहोर्न पर्दैन। जब तिमी कृष्णमय बन्दछौ, वर्तमानमा तिमीले प्राप्त गरेको सुविधाभन्दा बढी सुविधा प्राप्त गर्न सक्दछौ। त्यो तथ्य नै हो। म गत बीस वर्षदेखि एक्लै बसिरहेको छु तर मलाई कुनै समस्या भएको छैन। संन्यास लिन भन्दा पहिला म दिल्लीमा बस्दथे। यद्यपि म एक्लै बस्दथेँ मलाई कुनै समस्या थिएन।

**श्याम सुन्दर—** यदि तिमीले आध्यात्मिक अनुशासनलाई स्वीकार गरेनौ भने तिमीलाई अन्य आपत व्योहोर्न प्रकृतिले बाध्य गर्दछिन्।

**श्रील प्रभुपाद—** त्यो हो नै। त्यो कुरा भगवद्गीतामा उल्लेख छ—

*दैवी ह्येषा गुणमयी मम माया दुरत्यया।*
*मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते।।*

"प्रकृतिका तीन गुणले युक्त मेरो दैवीशक्तिबाट पार पाउन अत्यन्त

कठिन छ। तर, जो मेरो शरणमा पर्दछ, उसले यसलाई सजिलैसँग पार गर्न सक्दछ।"

मायाले धेरै कठिनाइहरू दिन्छिन् तर जब भगवान् श्रीकृष्णको शरणमा परिन्छ अन्य कठिनाई आउदैनन्।

**श्याम सुन्दर—** हामीहरू यति मूर्ख छौ हामी सदैव "भविष्यमा म सुखी हुनेछु" भन्ने मात्र सोच्दछौं।

**श्रील प्रभुपाद—** हो, त्यो नै माया वा भ्रम हो। त्यसो सोच्नु गधासमान नै हो। गधामा चढेर उसको मुख अघि घाँस राखे पछि गधाले सोच्दछ "म केही अघि बढे भने घाँस पाउन सक्दछु।" (बब हाँस्दछन्) तर, त्यो घाँस जहिले पनि एक पिट पर हुन्छ। त्यो गधावाद हो। (सबै हाँस्दछन्) प्रत्येकले सोच्दछन्, "म केही अघि बढे भने मैले त्यो प्राप्त गर्दछु र म सुखी हुन्छु।" (लामो समय शून्यता हुन्छ, त्यहाँ साइकलको घण्टी बजेको बच्चा खेलेको अर्काले बोलाएको आज आउँछ)

**बब—** म तपाईंलाई धेरै धन्यवाद दिन्छु, भोलि म

**श्रील प्रभुपाद—** ए

**बब—** भोलि म तपाईंलाई छोडेर.......

**श्रील प्रभुपाद—** छोड्ने होइन बाँच्ने कुरा गर (अङ्ग्रेजीमा Leave होइन Live)

**बब—** अहिले होइन तर भोलि आफ्नो सहर फर्कने बारेमा सोचिरहेको छु।

**श्रील प्रभुपाद—** नफर्क।

**बब—** म यहाँ भोलिसम्म बस्दछु।

**श्रील प्रभुपाद—** तिमी यहीँ नै बस।

**बब—** यदि तपाईंले भन्नुहुन्छ भने म यहीँ बस्दछु।

**श्रील प्रभुपाद—** हो, तिमी धेरै असल युवक हौ। (लामो शून्यता) जब जीवले भगवान् श्रीकृष्णलाई बिर्सन्छ, उनीहरू यस भौतिक संसारमा

आउँदछन्, यो ज्यादै सरल छ। "कृष्ण" को अर्थ उहाँका नाम स्वरूप, धाम र लीला सबै हुन्। जब हामी कुनै राजाका बारेमा भन्दछौं भने त्यसको अर्थ राजाको सरकार, राजाको दरबार, राजाकी रानी, राजाका छोराहरू, सचिव, सैनिक शक्ति र क्रियाकलापहरू सबै हुन्छन्, होइन ?

**बब—** हो।

**श्रील प्रभुपाद—** त्यसरी नै, भगवान् श्रीकृष्ण ईश्वर हुनुहुन्छ। जब हामी भगवान् श्रीकृष्णका बारेमा सोच्दछौं हामीहरू भगवान् श्रीकृष्ण र उहाँका शक्तिहरूका सम्पर्कमा हुन्छौं। त्यो "राधाकृष्ण" उच्चारणबाट पूर्ण हुन्छ। "राधा" शब्दले भगवान् श्रीकृष्णका सम्पूर्ण शक्तिहरूको प्रतिनिधित्व हुन्छ र "कृष्ण" परम ईश्वर हुनुहुन्छ। जब हामीले भगवान् श्रीकृष्णका बारेमा बोल्दछौँ त्यसले सम्पूर्ण जीवलाई पनि समाहित गर्दछ, किनभने सबै जीव भगवान् श्रीकृष्णका उच्चस्तरका शक्ति हुन्। जब यी शक्तिले शक्तिमान्को सेवा गर्दैनन् त्यो नै उनीहरूको भौतिक अस्तित्व हो। सम्पूर्ण विश्वले भगवान् श्रीकृष्णको सेवा गरिरहेको छैन। तिनीहरूले अन्य तरिकाले भगवान् श्रीकृष्णको सेवा गरिरहेका छन्, जसरी आज्ञा नमान्ने नागरिकले सरकारको सेवा परोक्ष तरिकाले गर्दछ त्यसरी नै परोक्ष तरिकाले गरिरहेका छन्। सरकारका नियमको पालना नगर्ने कैदीहरू कारागारमा आउँदछन् तर कारागारमा तिनीहरूलाई बलपूर्वक नियमको पालना गर्न लगाइन्छ। त्यसरी नै यहाँका सम्पूर्ण जीव अज्ञानताले हो वा आफैं रोजेर हो भगवान्रहित छन्। तिनीहरू भगवान्को सर्वोच्चतालाई स्वीकार गर्दैनन्। तिनीहरू राक्षस हुन्। हामीहरू तिनीहरूलाई तिनीहरूको मूल अवस्थामा ल्याउने प्रयास गरिरहेका छौं। त्यो नै कृष्णभावनामृत आन्दोलन हो।

**बब—** मैले भक्तहरूसँग कुरा गरेको विषय जुन औषधीका बारेमा थियो, त्यो तपाईंसँग सोध्न चाहन्छु। म आज भक्तहरूसँग नदीको तीरतिर गएको थिएँ। मलाई चिसो र रूघा लागेको थियो त्यसैले म पानीमा जान्न

भने। कसैले गङ्गा भएर नगएको होला भन्ने ठाने। कसैले रूघा लागेको छ नजाऊ भने। यसरी कुरा गरेका थियौं तर मैले भने केही बुझ्न सकिँन। के हाम्रा पूर्व खराब कर्मले हामी रोगी हुन्छौं?

**श्रील प्रभुपाद—** हो त्यो सत्य नै हो। हाम्रा पूर्व अपवित्र क्रियाकलापका कारण हामीले सबै प्रकारका दुःख भोग्नुपर्दछ।

**बब—** तर, यदि कोही कर्मी प्रभाबबाट मुक्त भए पनि के ऊ बिमार हुन सक्दछ?

**श्रील प्रभुपाद—** हुँदैन, तैपनि ऊ रोगी भए पनि त्यो धेरै क्षणिक मात्र हुन्छ। उदाहरणका लागि यो पंखा चलिरहेको छ। यदि तिमीले यसको विद्युतीय शक्ति हटाइदियौ भने यो पंखा केही समय चलिरहन्छ त्यो चलाई विद्युतीय शक्तिले भएको होइन। त्यो के कारणले हो भने- त्यसलाई तिमी के भन्दछौ?

**श्यामसुन्दर—** गति

**श्रील प्रभुपाद—** अँ गति। तर, जब त्यो गति समाप्त हुन्छ अनि अरू गति हुँदैन। त्यसरी नै यदि भक्त भगवान् श्रीकृष्णको शरणमा पर्दछ भने उसका भौतिक परिणामबाट हुने दुःखकष्ट क्षणिक हुन्छन्। त्यसकारण भक्तले भौतिक दुःखलाई दुःख नै ठान्दैन, उसले दुःखलाई भगवान् कृष्णको कृपा ठान्दछ।

**बब—** यस्तो अवधारणा पूर्ण आत्मामा मात्र सम्भव होलाजस्तो देखिन्छ

**श्रील प्रभुपाद—** चौबीसै घण्टा कृष्णभक्तिमा संलग्न नै पूर्ण आत्मा हो। त्यो नै सिद्धि पनि हो। त्यो नै दिव्य अवस्था हो। पूर्णताको अर्थ आफूलाई आफ्नो मूल चेतनामा संलग्न गराउनु हो। भगवद्गीता (८.१५) मा भगवान् श्रीकृष्णले भन्नुभएको छ :-

*मामुपेत्य पुनर्जन्म दुःखालयमशाश्वतम्।*
*नाप्नुवन्ति महात्मनः संसिद्धि परमां गताः ।।*

"जो कोही पनि मकहाँ आइपुग्दछ, ऊ फर्केर यो दुःखै दुःखले युक्त

क्षणिक भौतिक संसारमा आउँदैन। यो नै पूर्णता हो।" संसिद्धि अर्थात् सिद्धि भनेको नै पूर्णता हो। त्यो नै ब्रह्म साक्षात्कार वा आध्यात्मिक अनुभूति हो। संसिद्धिको अर्थ समर्पण हो, जुन ब्रह्मसाक्षात्कार पश्चात् आउँदछ।

**बब—** कृपया, त्यो अन्तिम कुरा पुनः भन्न सक्नुहुन्छ ?

**श्रील प्रभुपाद—** संसिद्धि

**बब—** हो

**श्रील प्रभुपाद—** 'सम' को अर्थ पूरा र 'सिद्धि'को अर्थ पूर्णता हो। भगवद्गीतामा भनिएको छ- जुन व्यक्ति भगवान्को धाममा जान्छ उसले नै पूर्णता प्राप्त गरेको हुन्छ। जब उसले म यो शरीर होइन आत्मा हुँ भन्ने अनुभूति गर्दछ। अनि मात्र पूर्णता प्राप्त हुन्छ। त्यो नै ब्रह्मभूत अवस्था हो वा त्यसलाई ब्रह्मसाक्षात्कार भनिन्छ। त्यो नै पूर्णता हो। जब व्यक्ति भक्तिमय सेवामा संलग्न हुन्छ, अनि उसले ब्रह्मसाक्षात्कार गर्दछ अनि मात्र संसिद्धि प्राप्त हुन्छ। त्यसकारण, यदि कुनै व्यक्ति भक्तिमय सेवामा संलग्न भएको छ भने उसले ब्रह्मसाक्षात्कार गरेको छ भन्ने बुझ्नुपर्दछ। त्यसैले यसलाई संसिद्धि भनिन्छ।

**बब—** म विनम्रतापूर्वक सोध्छु, के तपाईंले रोगको अनुभव गर्नुहुन्छ ?

**श्रील प्रभुपाद—** गर्दछु।

**बब—** के यो तपाईंको पूर्वकर्मको परिणाम हो ?

**श्रील प्रभुपाद—** हो

**बब—** यस भौतिक संसारमा कसैले पनि कर्मबाट पूर्णतया छुट्कारा पाउन सक्दैन ?

**श्रील प्रभुपाद—** हो, छुट्कारा पाउन सकिन्छ। भक्तका लागि अरू कर्म हुँदैन र कर्मको प्रतिफल पनि हुँदैन।

**बब—** तर, तपाईं त सबैभन्दा श्रेष्ठ भक्त हुनुपर्दछ।

**श्रील प्रभुपाद—** होइन म आफूलाई सर्वश्रेष्ठ भक्त हुँ भन्ने ठान्दिनँ। म तल्लोस्तरको भक्त हुँ।

**बब—** होइन
**श्रील प्रभुपाद—** तिमीश्रेष्ठ भक्त हौ।
**बब—** (हाँस्दछन्) अहो, होइन होइन। तपाईंले जे भन्नुहुन्छ त्यो सधैं ठीक हुन्छ। त्यसैले तपाईं सर्वश्रेष्ठ भक्त हुनुहुन्छ।
**श्रील प्रभुपाद—** कुरा के हो भने श्रेष्ठ भक्त पनि प्रचार प्रसारमा लागे पछि दोस्रोस्तरमा आउँदछ।
**बब—** सर्वश्रेष्ठ भक्तले के गर्नुपर्दछ?
**श्रील प्रभुपाद—** सर्वश्रेष्ठ भक्तले प्रचार प्रसार गर्दैन।
**बब—** उसले के गर्दछ?
**श्रील प्रभुपाद—** उसले प्रचारप्रसार गर्न आवश्यक छैन भन्ने ठान्दछ। उसका लागि प्रत्येक व्यक्ति भक्त हुन्छ। (बब हृदयदेखि नै हाँस्दछन्) हो, उसले कोही पनि अभक्त देख्दैन सबै भक्त देख्दछन्। उसलाई उत्तम अधिकारी भनिन्छ। तर, म भनेँ प्रचार गरिरहेको छु। त्यसैले कसरी म सर्वश्रेष्ठ भक्त हुँ भन्न सक्दछु? जस्तै राधारानी उहाँले कोही पनि अभक्त देख्नुहुन्न। त्यसकारण, हामी राधारानीलाई भेट्न वा उहाँकहा जाने प्रयास गर्दछौं।
**बब—** उहाँ को हुनुहुन्छ?
**श्रील प्रभुपाद—** उहाँ भगवान् श्रीकृष्णकी जीवन साथी हुनुहुन्छ।
**बब—** ए !
**श्रील प्रभुपाद—** यदि कोही पनि राधारानीकहाँ पुग्दछ भने उहाँले "यो हजुरको भक्त हो ऊ म भन्दा राम्रो छ भनेर भगवान् श्रीकृष्णलाई सिफारिस गर्नुहुन्छ। अनि, भगवान् श्रीकृष्णले उसलाई अस्वीकार गर्न सक्नुहुन्न। ऊ नै सर्वश्रेष्ठ भक्त हुन्छ। तर, यसको नक्कल गर्नुहुँदैन र "म सर्वश्रेष्ठ" भक्त भएँ भन्नुहुँदैन। '**ईश्वरे तदधीनेषु बलिशेषु द्विषत्सु च**' दोस्रो श्रेणीको भक्तको दृष्टिमा केही व्यक्ति भगवान् प्रति ईष्यालु भएको देखिन्छ, तर सर्वश्रेष्ठ भक्तको दृष्टिमा त्यस्तो हुँदैन। सर्वश्रेष्ठ भक्त भन्दछन्— "कोही पनि भगवान्प्रति ईष्यालु छैनन्, सबै म भन्दा

असल छन्।" चैतन्य चरितामृतका लेखक कृष्णदास कविराज जस्तै। उहाँ भन्नुहुन्थ्यो— "म दिसाको कीराभन्दा पनि निम्न स्तरको छु।"

**बब—** यस्तो कसले भनेको हो?

**श्रील प्रभुपाद—** चैतन्यचरितामृतका लेखक कृष्णदास कविराजले भन्नुभएको हो। **पुरीषेर कींट हइते मुनि सेलघिष्ट।** उहाँले कुनै देखावटी कुरा भन्नुभएको होइन र अहम पनि गर्नुभएको होइन। उहाँले त्यस्तो अनुभव गर्नुभएको हो।" म निम्नस्तरको छु सबै श्रेष्ठ छन्, तर म निम्नस्तरको छु। प्रत्येक व्यक्ति भगवान् श्रीकृष्णको सेवामा संलग्न छन् म भने संलग्न छैन।" चैतन्य महाप्रभु भन्नुहुन्थ्यो- "ममा अलिकति पनि भगवान् श्रीकृष्ण प्रति सर्मपण छैन। म केवल देखाउनका लागि रून्छु। यदि म भगवान् श्रीकृष्णको भक्त भएको भए मेरो पहिला नै मृत्यु भइ सक्दथ्यो तर म जीवित छु। त्यो नै मैले भगवान् श्रीकृष्णलाई प्रेम गर्दिनँ भन्ने प्रमाण हो।" सर्वश्रेष्ठ भक्तको दृष्टि, विचार यस्तो हुन्छ। उहाँ भगवान् श्रीकृष्णको प्रेममा यति लीन हुनुहुन्थ्यो उहाँ भन्नुहन्थ्यो, "प्रत्येक व्यक्ति भक्त हुन्, तर म निम्न स्तरको हुँ। त्यसकारण मैले भगवान्को दर्शन गर्न सकेको छैन। यो नै सर्वश्रेष्ठ भक्त हो।

**बब—** त्यसो हो भने भक्तले प्रत्येक दिनको मुक्तिका लागि कार्य गर्नुपर्दछ?

**श्रील प्रभुपाद—** हो, गर्नुपर्दछ। भक्तले आध्यात्मिक गुरुको निर्देशनअनुसार कार्य गर्नुपर्दछ सर्वश्रेष्ठ भक्तको नक्कल अनुकरण गर्नुहुँदैन।

**श्याम सुन्दर—** तपाईंले एक पल्ट म भक्तहरूको पापमय कर्मद्वारा रोगी भएँ भनेर भन्नु भएको थियो। के कहिलेकाहीँ यही कारणले रोग लाग्दछ?

**श्रील प्रभुपाद—** हेर, भगवान् श्रीकृष्णले भन्नुभएको छ- **अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुचः।** "म तिमीलाई तिम्रा सबै पापका प्रतिफलबाट उद्धार गर्दछु नडराऊ।" भगवान् श्रीकृष्ण यति शक्तिशाली हुनुहुन्छ, उहाँले अरू सम्पूर्ण पाप ग्रहण गरेर तिनीहरूलाई ठीक वा पवित्र गराउन सक्नुहुन्छ। जब जीवले भगवान् श्रीकृष्णका लागि कार्य गर्दछ

उसले पनि आफ्ना भक्तहरूका पापमय कार्यको जिम्मेवारी लिनुपर्दछ। त्यसकारण गुरु हुन त्यति सजिलो कार्य होइन। तिमीले देख्यौ ? उसले सबै विष लिएर आफूमा समाहित गर्नुपर्दछ। ऊ भगवान् श्रीकृष्ण होइन त्यसैले कहिलेकाहीँ उसलाई समस्या आईपर्दछ। त्यसकारण चैतन्य महाप्रभुले निषेध गर्नुभएको छ :— "धेरै शिष्य नबनाऊ।" तर, प्रचारको कार्य गर्दा र प्रचारलाई विस्तार गर्नका लागि हामीले धेरै शिष्य बनाउनुपर्दछ। यो तथ्य नै हो। गुरुले आफ्ना शिष्यहरूको सबै पापमय क्रियाकलापहरूको जिम्मेवारी लिनुपर्दछ। त्यसकारण, जबसम्म सबै पापहरूलाई समीकरण गर्न सक्दैन, तबसम्म धेरै शिष्य बनाउनु खतरनाक कार्य नै हो।

*वाञ्छा कल्पतरुभ्यश्च कृपासिन्धुभ्य एव च।*
*पतितानां पावनेभ्यो वैष्णवेभ्यो नमो नमः ।।*

"म भगवान्का सम्पूर्ण वैष्णव भक्तहरूलाई नमस्कार गर्दछु। कल्पवृक्षले जस्तै उहाँले प्रत्येकका इच्छा पूरा गरिदिन सक्नुहुन्छ। उहाँहरू पतित आत्माप्रति कृपालु हुनुहुन्छ।" आध्यात्मिक गुरुले सबै पतित आत्माको जिम्मेवारी लिनुहुन्छ। त्यस्तै, विचारधारा बाइबलमा पनि छ। जिसस क्राइस्टले सबैका पापमय कर्मका प्रतिफल ग्रहणगरेर आफ्नो जीवन उत्सर्ग गर्नुभयो। आध्यात्मिक गुरुको जिम्मेवारी यस्तो हुन्छ, किनभने कृष्ण भगवान् हुनुहुन्छ। उहाँ **अपाय :** विद्ध हुनुहुन्छ। पापको प्रतिफलले उहाँलाई आक्रमण गर्न वा छुन सक्दैन। तर, जीवहरू सानो रूपमा भएका हुनाले तिनीहरूमा त्यसको प्रभाव पर्न सक्दछ। यो एउटा सानो आगो र ठुलो आगो जस्तै हो। यदि सानो आगोमा ठुलो कुरा राखियो भने त्यो आगो निभ्दछ, तर ठुलो आगोमा जे राखे पनि केही फरक पर्दैन। त्यो आगोले सबै डढाउँदछ।

**बब—** क्राइस्टले सहनुभएको दुःख पनि यस्तै प्रकृति हो ?

**श्रील प्रभुपाद—** उहाँले सबैका पापकर्मका प्रतिफल ग्रहण गर्नुभयो। त्यसकारण, दुःख सहनुपर्‍यो।

**बब—** ए, त्यसो रहेछ !

**श्रील प्रभुपाद—** उहाँले भन्नुभएको कुरा बाइबलमा छ :- उहाँले सबैका पापकर्मका प्रतिफल ग्रहण गर्नुभयो र आफ्नो जीवन उत्सर्ग गर्नुभयो। तर, क्रिस्चियनहरू आफू मूर्खता पूर्ण कार्य गरिरहने तर जिससलाई भने दुःख सहन गरिरहनुपर्ने नियम बनाए। उनीहरू महान मूर्ख थिए, उनीहरूले जिसस क्राइस्टले उनीहरूका सबै पापकर्मको प्रतिफल ग्रहण गर्ने र आफूहरू भने मूर्खतापूर्ण कार्य गरिरहने सम्झौता गरे। उनीहरूको धर्म यस्तो छ। क्राइष्ट अति उदार हुनुहुन्थ्यो। उहाँ आफूले दुःख सहेरपनि अरूको पाप ग्रहण गर्नुभयो तर तिनीहरूलाई त्यो कार्यले पाप गर्ने कार्य रोक्न प्रेरणा दिएन। उनीहरू त्यस्तो सोच्न सक्ने अवस्थामा आइपुगेनन्। उनीहरूले यसलाई सहजतापूर्वक लिए- "भगवान् जिसस क्राइष्टले दुःख भोगे ठिकै छ हामी मूर्खतापूर्ण कार्य गरिराखौं।" यस्तै भन्दछन् होइन ?

**बब—** यस्तै हो।

**श्रील प्रभुपाद—** तिनीहरूलाई लाज लाग्नुपर्ने हो— "भगवान् जिसस क्राइष्टले हाम्रालागि दुःख पाउनुभयो तर हामीले भने निरन्तर पापकर्म गरिरहेका छौं।" उहाँले "तिमीले हत्या नगर" भन्नुभयो, तर उनीहरू हत्यामा संलग्न भइरहेका छन् र सोच्दछन् भगवान् जिसस क्राइष्टले हामीलाई क्षमा गरिदिनुहुन्छ र सबै पापका प्रतिफल आफूले लिनुहुन्छ। यस्तो भइरहेको छ।

"मेरा पापकर्मका प्रतिफलले आध्यात्मिक गुरुलाई दुःख हुन्छ। त्यसैले मैले अलिकति पनि पापमय क्रियाकलाप गर्नुहुँदैन भन्ने कुरामा हामी धेरै नै सावधान हुनुपर्दछ। शिष्यको यो कर्तव्य नै हो। यदि उसले पाप कर्म गऱ्यो भने आध्यात्मिक गुरुले दुःख भोग्नुपर्दछ। आफ्ना पापकर्मको प्रतिफलले गर्दा आध्यात्मिक गुरुले दुःख भोग्नुपर्दछ भन्ने कुरा बुझेर यसतर्फ शिष्य संवेदनशील हुनुपर्दछ। यदि आध्यात्मिक गुरुलाई कुनै रोग लाग्दछ भने त्यो अरूका पापकर्मका प्रतिफलले गर्दा भएको हो।

त्यसकारण धेरै शिष्य नबनाउ भन्ने आदेश छ। तर, हामी भने बनाउँदछौं किनभने हामी प्रचारप्रसार गरिरहेका छौं। हामीले दुःख पाए पनि केही छैन। हामीले शिष्यहरू स्वीकार गर्न नै पर्दछ।

जब मैले दुःख भोग्दछु, त्यो मेरो कर्मको फल हो भन्ने तिम्रो प्रश्न थियो। होइन र? त्यो मेरो नराम्रो कर्म हो। मैले केही मूर्ख शिष्य पनि स्वीकार गरेको छु। त्यो नै मेरो खराब कर्म हो।

**बब—** यस्तो कार्य कहिलेकाहीँ हुन्छ?

**श्रील प्रभुपाद—** हो, हुन्छ। यस्तो हुने निश्चित छ किनभने हामीले धेरै शिष्यहरू स्वीकार गरेका छौं। "मलाई मेरो आध्यात्मिक गुरुले उद्धार गर्नुभएको छ। त्यसैले मैले उहाँ दुःख भोग्ने वातावरण बनाउनु हुँदैन।" शिष्यले यस्तो सोच्नु पर्दछ र उसको कर्तव्य पनि हो। त्यसैले यसतर्फ ऊ सावधान हुनुपर्दछ। जब आध्यात्मिक गुरुले दुःख पाउनुहुन्छ, निश्चय नै भगवान् श्रीकृष्णले उहाँलाई बचाउनुहुन्छ। भगवान् श्रीकृष्णले सोच्नुहुन्छ- "उसले पतित आत्मालाई उद्धार गर्न यत्रो जिम्मेवारी लिएको छ।" त्यसैले भगवान् श्रीकृष्ण भन्नुहुन्छ- **कौन्तेय प्रतिजानीहि न मे भक्तः प्रणश्यती।** हे कुन्तीपुत्र ! तिमी निर्भीक भएर घोषणा गर, मेरा भक्तको कहिल्यै विनाश हुँदैन। आध्यात्मिक गुरु सधैँ सुरक्षित हुन्छन् किनभने उहाँले भगवान् श्रीकृष्णका लागि खतरा स्वीकार गर्नुभएको हुन्छ।

**बब—** तपाईँले भोग्ने दुःखको पीडा हाम्रो समान हुँदैन।

**श्रील प्रभुपाद—** होइन, यो कर्मको कारणले होइन। कहिलेकाहीँ पीडा हुन्छ जसले गर्दा शिष्यले जान्दछन्— "हाम्रा पापकर्मले गर्दा हाम्रा आध्यात्मिक गुरुले दुःख भोग्नुभएको छ।"

**बब—** तपाईँको स्वास्थ्य अहिले राम्रो छ।

**श्रील प्रभुपद—** म सधैँ स्वस्थ नै छु। म दुःखले पीडित हुँदा पनि भगवान् श्रीकृष्णले मलाई संरक्षण गर्नुहुन्छ भन्ने मलाई थाहा छ। तर, यो दुःख मेरो पापकर्मका कारणले भएको होइन।

**बब—** म बस्ने सहरमा मैले केवल उमालेको पानी मात्र पिउँदछु किनभने केही पानीमा नै रोग हुन्छ। अब मैले किन उमालेको पानी पिउने, जब मलाई कुनै रोग लाग्ने अवस्था नै छ भने? त्यसो हो भने मैले अब जुनसुकै पानी पिए भयो। यदि मैले सही कार्य गरिन भने जसरी पनि म बिमारी भइहाल्दछु।

**श्रील प्रभुपाद—** जबसम्म तिमी भौतिक संसारमा हुन्छौ तिमीले भौतिक नियमलाई उपेक्षा गर्न सक्दैनौं। अनुमान गर तिमी जङ्गल जान्छौ, जहाँ बाघ छ। बाघले तिमीलाई आक्रमण गर्दछ यो जानेको कुरा हो। त्यसो हो भने तिमी स्वेच्छाले आक्रणमणका लागि किन जान्छौ? त्यसको अर्थ भक्तले अनावश्यक भौतिक खतरा तर्फ उन्मुख हुनुहुँदैन। "अब म भक्त भएँ म सबै परिस्थितिलाई चुनौती दिन्छु" यस्तो सोच्नुहुँदैन। त्यो मूर्खतापूर्ण कार्य हो

*अनासक्तस्य विषयान् यथार्हम उपयुञ्जत।*
*निर्बन्धः कृष्ण सम्बन्धे युक्तं वैराग्यमुच्यते।।*

भक्तलाई विनाआसक्ति जीवनका लागि आवश्यक वस्तु स्वीकार गर्ने सुझाब दिइन्छ। उसले उमालेको पानि पिउनुपर्दछ, तर यदि उमालेको पानी उपलब्ध भएन भने त्यसको अर्थ पानी नपिउनु हो र? यदि उपलब्ध भएन भने उसले सामान्य पानी पिउनु पर्दछ। हामीहरू कृष्णप्रसाद ग्रहण गर्दछौं, तर जब भ्रमणमा हुन्छौं कहिलेकाहीँ हामी होटलमा भोजन लिन्छौं।" म होटलमा भोजन गर्दिन म भोकै बस्दछु।" भक्तले यस्तो सोच्न सक्दछ। तर यदि म भोकै बसे भने कमजोर हुन्छ र मैले प्रचार गर्न सक्दिन भन्ने सोच्नुपर्दछ।

**बब—** के भक्तले आफ्नो व्यक्तिगत स्वतन्त्रता हराउँदछ?

**श्रील प्रभुपाद—** होइन, उसलाई भगवान् श्रीकृष्णलाई प्रसन्न गराउने पूर्ण स्वतन्त्रता हुन्छ। भगवान् श्रीकृष्ण भन्नुहुन्छ, "मेरो शरणमा आऊ" अनि ऊ स्वेच्छाले शरणमा पर्दछ। यसको अर्थ उसले आफ्नो स्वतन्त्रता

हरायो भन्ने होइन। उसको स्वतन्त्रता ऊसँग नै हुन्छ। अर्जुन जस्तै, पहिला उनी आफ्नो व्यक्तिगत स्वतन्त्रताले गर्दा युद्ध गर्न मानेका थिएनन् तर जब उनले भगवान्लाई आध्यात्मिक गुरु स्वीकार गरे अनि उनी शिष्य भए। त्यसपछि भगवान् श्रीकृष्णले जेजे आदेश दिनुभयो त्यो गर्छु भने। त्यसको अर्थ उनले आफ्नो स्वतन्त्रता हराए भन्ने होइन। उनले स्वेच्छाले "भगवान् श्रीकृष्ण जे भन्नुहुन्छ त्यो गर्दछु" भनेर स्वीकार गरे। जस्तै मेरा शिष्यहरू पनि तिनीहरूले आफ्नो स्वतन्त्रता हराएका छैनन् तर त्यो स्वतन्त्रता ममा समर्पित गरेका छन्। त्यसो गर्न आवश्यक नै हुन्छ। उदाहरणका लागि अनुमान गरौं कुनै मानिस सम्भोगबाट सन्तुष्ट छैन त्यसको अर्थ ऊ नपुंसक भयो भन्ने होइन। यदि ऊ चाहन्छ भने हजारौं पटक सम्भोग गर्न सक्दछ। तर, उसले स्वेच्छाले त्यसको तिरस्कार गर्दछ। **परमं दृष्ट्वा निवर्तते—** उसमा त्योभन्दा उच्चस्तरको स्वाद छ। कहिलेकाहीँ हामी उपवास बस्दछौं त्यसको अर्थ हामी बिरामी भयौं भन्ने होइन हामी स्वेच्छाले उपवास बस्दछौं। त्यसको अर्थ म भोको छैन वा मैले खाना खान सक्दिन भन्ने होइन। तर, हामी स्वेच्छाले उपवास बस्दछौं।

**बब—** के शरणागति लिएका भक्तले आफ्नो विभिन्न वस्तुप्रति छुट्टै स्वाद वा विचार राख्न सक्दछ?

**श्रील प्रभुपाद—** सक्दछ।

**बब—** उसले आफ्नो छुट्टै मन पराउने नपराउने विचार राख्न सक्दछ?

**श्रील प्रभुपाद—** सक्दछ। उसले सबै कुरा पूर्णरूपले राख्न सक्दछ। तर, उसले प्रत्येक कार्यको प्राथमिकता भगवान् श्रीकृष्णलाई दिन्छ। अनुमान गरौं मलाई कुनै कुरा राम्रो लागेको छ, तर भगवान् श्रीकृष्णले "तिमीले त्यो प्रयोग गर्नुहुँदैन" भन्नुभयो भने मैले त्यो प्रयोग गर्नुहुँदैन। मैले त्यो भगवान् श्रीकृष्णका लागि त्याग गर्दछु। भगवान् श्रीकृष्णले सकारात्मक रूपले भन्नुहुन्छ, "मलाई यो वस्तु मनपर्दछ" हामीले भगवान् श्रीकृष्णलाई के मन पर्दछ त्यो अर्पण गर्नुपर्दछ अनि हामीले त्यो

प्रसाद ग्राहण गर्दछौं। भगवान् श्रीकृष्ण राधारानीलाई मन पराउनुहुन्छ। त्यसकारण सबै गोपीहरू राधारानीलाई भगवान् श्रीकृष्ण तर्फ जान प्रोत्साहित गर्दछन्।" भगवान् श्रीकृष्ण यी गोपीलाई मन पराउनुहुन्छ ठीकै छ उहाँलाई नै भगवान् श्रीकृष्ण अघि पठाऊँ" त्यो नै कृष्ण भक्ति हो अर्थात् भगवान् श्रीकृष्णका इन्द्रियहरूको सन्तुष्टि गराउनु हो, आफ्ना इन्द्रियको होइन। त्यो नै भक्ति हो। त्यसलाई भगवान् श्रीकृष्णतर्फको प्रेम भनिन्छ। "अहो ! भगवान् श्रीकृष्णले यो मन पराउनु हुन्छ मैले त्यो उहाँमा अर्पण गर्नुपर्दछ।"

**बब—** म केही प्रसाद मन पराउँछु तर कुनै मलाई मन नपरेका पनि छन्।

**श्रील प्रभुपाद—** तिमीले त्यसो गर्नुहुँदैन। भगवान् श्रीकृष्णलाई नै अर्पण गरिएको छ भने त्यो तिमीले स्वीकार गर्नुपर्दछ, त्यो नै पूर्णता हो। तिमीले "मलाई यो मन पर्दछ यो मन पर्दैन" भन्न सक्दैनौ। जबसम्म तिमीले यस्तो पक्षपात गर्दछौ तबसम्म तिमीले प्रसादको प्रशंसा वा सम्मान नगरेको हुन्छ। मन पराउनु मन नपराउनु त्यस्तो गर्नु हुँदैन, भगवान् श्रीकृष्णले जे मन पराउनुहुन्छ, त्यो सबै ठिक हुन्छ।

**एउटा भक्त—** तर यदि कसैले भगवान् श्रीकृष्णको लागि भोजन तयार गर्दछ, तर ठीकसँग तयार गर्दैन।

**श्रील प्रभुपाद—** होइन, यदि इमानदारी र भक्तिपूर्वक तयार गरिएको छ भने भगवान् श्रीकृष्णले मन पराउनुहुन्छ। विदुरले जस्तै विदुरले भगवान् श्रीकृष्णलाई केरा अर्पण गरिरहेका थिए तर उनी भगवान्मा यति लीन भए कि उनले केरा फ्याँके बोक्रा भगवान् श्रीकृष्णलाई अर्पण गरे भगवान् श्रीकृष्णले ती बोक्रा खानुभयो। (सबै हाँस्दछन्) भगवान् श्रीकृष्णलाई उनले भक्तिमा लीन भएर उहाँलाई बोक्रा दिएका छन् भन्ने थाहा थियो। साथै, भक्तिपूर्वक अर्पण गरिएको जे पनि भगवान् श्रीकृष्णले ग्रहण गर्न सक्नुहुन्छ। त्यो भोजन भौतिकताले स्वादिलो वा बेस्वादिलो जे भए पनि

केही फरक पर्दैन। त्यसरी नै भक्तले पनि कृष्णप्रसाद स्वादिलो भए पनि नभए पनि ग्रहण गर्दछ। हामीले जे पनि स्वीकार गर्नुपर्दछ।

**एउटा भक्त—** तर, यदि त्यहाँ भक्ति छैन भने ?

**श्रील प्रभुपाद—** यदि भक्ति छैन भने त्यो भोजन स्वादिलो, बेस्वादिलो जस्तो भएपनि भगवान् श्रीकृष्णले मन पराउनुहुन्न र त्यो स्वीकार गर्नुहुन्न।

**एउटा भक्त—** भारतमा .............

**श्रील प्रभुपाद—** अहो, भारत ! भारतका बारेमा कुरा नगर, दर्शनका बारेमा कुरा नगर। यदि भक्ति छैन भने भगवान् श्रीकृष्णले भारत वा तिम्रो देश जहाँ पनि त्यो वस्तु स्वीकार गर्नुहुन्न। भगवान् श्रीकृष्ण कुनै पनि महँगो वस्तु भएकाले धेरै स्वादिलो छ भनेर स्वीकार गर्न बाध्य हुनुहुन्न। वैकुण्ठमा भगवान् श्रीकृष्णका लागि धेरै स्वादिला विभिन्न परिकार उपलब्ध छन्। उहाँ तिम्रो भोजनप्रति इच्छुक हुनुहुन्न। उहाँले तिम्रो भक्ति स्वीकार गर्नुहुन्छ। सही कुरा भनेको भक्ति हो भोजन होइन। भगवान् श्रीकृष्णले यस भौतिक जगत्का कुनै पनि भोजन स्वीकार गर्नुहुन्न। उहाँ केवल भक्ति स्वीकार गर्नुहुन्छ।

*पत्रं पुष्पं पलं तोयं यो मं भक्त्या प्रयच्छाति।*
*तदहं भक्त्युपहृतमश्नामि प्रयतात्मनः ।।*

"कसैले मलाई प्रेमपूर्वक वा भक्तिपूर्वक पत्र, फूल, जल, फल जे पनि अर्पण गर्दछ त्यो म खुसीसाथ स्वीकार गर्दछु।" (भगवद्गीता ९.२६) यस्तो भक्तिको आवश्यकता हुन्छ। त्यसकारण हामीले जो भक्त छैन उसलाई भोजन बनाउने अनुमति दिँदैनौं। अभक्तका हातबाट तयार कुनै पनि वस्तु भगवान् श्रीकृष्णले स्वीकार गर्नुहुन्न। उहाँले किन स्वीकार गर्नुपर्‍यो ? उहाँ भोको हुनुहुन्न। उहाँलाई कुनै पनि भोजनको आवश्यकता नै छैन। उहाँ केवल भक्ति चाहनुहुन्छ, त्यति नै हो।" त्यो नै मुख्य कुरा हो। त्यसैले भक्त बन्नुपर्दछ, राम्रो मान्छे होइन। यदि ऊ भक्त हो भने राम्रो मान्छे पनि हुन्छ। ऊ स्वतः राम्रो मान्छे बन्दछ। त्यसकारण, व्यक्ति

केवल भक्त बन्नुपर्दछ। त्यसपछि सबै राम्रा गुणहरू स्वतः प्राप्त हुन्छन्। तर, यदि ऊ भक्त छैन भने उसका राम्रा गुणहरूको कुनै अर्थ हुँदैन। ऊ केवल मानसिक उडानमा हुन्छ, उसमा कुनै राम्रा गुण हुँदैनन्।

**बब—** प्रसादका बारेमा अझै पनि मैले बुझ्न सकिँन।

**श्रील प्रभुपाद—** प्रसाद सधैँ प्रसाद हुन्छ। तर, हामी पूर्णतया माथि चढ्न सकेका छैनौं। त्यसैले, हामीले प्रसाद मन पराउदैनौं।

**बब—** कुनै प्रसादमा धेरै मसला हुन्छ, जसले गर्दा मेरो पेट दुख्छ।

**श्रील प्रभुपाद—** ए, त्यो रूचि नभएकाले भएको हो, तर मान्छेले यसतर्फ विचार गर्नुपर्दछ। भगवान् श्रीकृष्णलाई उच्चस्तरको भोजन अर्पण गर्नुपर्दछ। यदि मान्छेले निम्नस्तरको भोजन अर्पण गर्दछ भने उसले आफ्नो कर्तव्य ठिकसँग पूरा गरेको छैन। तर, यदि भक्तिपूर्वक भक्तले अर्पण गरेको छ भने भगवान् श्रीकृष्णले जे पनि स्वीकार गर्नुहुन्छ र भक्तले पनि त्यो प्रसाद मसला धेरै भएको भए पनि स्वीकार गर्नुपर्दछ हिरण्यकशिपुले आफ्ना छोरालाई विष पिउन दिए। उनले त्यो भगवान् श्रीकृष्णलाई अर्पण गरे र अमृत समान पिए। प्रसाद अरूका लागि मसला धेरै भएको भए पनि भक्तका लागि अति स्वादिष्ट हुन्छ। मसलाको के नै प्रश्न भयो ? राक्षसी पूतनाले भगवान्लाई विष अर्पण गरी तर उहाँ यति असल हुनुहुन्छ उहाँले सोच्नुभयो- "ऊ मकहाँ आमा भएर आई।" भगवान् श्रीकृष्णले नराम्रो पक्ष हेर्नुहुन्न केवल राम्रो पक्ष मात्र हेर्नुहुन्छ। जस्तै, मेरो एकजना भाइ छ उसले मेरा गुरुमहाराजसँग व्यापार गर्न चाहन्थ्यो तर मेरा गुरु महाराजले नराम्रो पक्ष लिनुभएन, राम्रो पक्ष लिएर सोच्नुभयो— ऊ मलाई केही सेवा दिन अघि बढेको छ।"

**बब—** केही भक्तहरू स्वास्थ्य समस्याका कारणले कुनै विशेष भोजन लिन सक्दैनन् भन्ने सोचौं। उदाहरणका लागि कुनै भक्तले कलेजोको समस्याले गर्दा घिऊ खान सक्दैनन् के त्यस्तो भक्तले सबै प्रकारको प्रसाद ग्रहण गर्नुपर्दछ ?

**श्रील प्रभुपाद—** होइन, होइन। जुन व्यक्ति पूर्ण भक्त भएको छैन उसले मात्र भेदभाव गर्दछ तर पूर्ण भक्तले यस्तो भेदभाव गर्दैन। तिमीले पूर्ण भक्तको नक्कल किन गर्ने ? जबसम्म तिमीले भेदभाव गर्दछौ तिमी पूर्ण भक्त होइनौ। त्यसैले, तिमीले कृत्रिम तरिकाले पूर्णभक्तको नक्कल गर्दै सबै कुरा किन खाने ?

यसको अर्थ पूर्णताले युक्त भक्तले कुनै भेदभाव गर्दैन। भगवान् श्रीकृष्णलाई अर्पण गरिएको जे पनि अमृत हो। भक्तले अर्पण गरेको जुनसुकै वस्तु भगवान् श्रीकृष्णले स्वीकार गर्नुहुन्छ। मेरा भक्तहरूले मलाई अर्पण गरेको जुनसुकै वस्तु म स्वीकार गर्दछु।" यही कुरा शुद्ध भक्तका लागि पनि लागु हुन्छ। के तिमीले कुरा बुझ्यौ ? पूर्णभक्तले कुनै भेदभाव गर्दैन। तर, यदि म पूर्ण भक्त होइन र भेदभाव गर्दछु भने मैले किन शुद्ध भक्तको नक्कल गर्ने ? शुद्ध भक्त नभएकाले मैले सबै कुरा पचाउन सम्भव हुँदैन। भक्त मूर्ख हुँदैन। भनिएको छ **कृष्ण जे मजे से बढा चतुर**। भक्तलाई आफ्नो अवस्थाका बारेमा जानकारी हुन्छ र ऊ अरूसँग कसरी व्यवहार गर्ने हो उसमा त्यसबारे पर्याप्त ज्ञान हुन्छ।

७

# कृष्ण ज्ञानमा कार्य गर्नु

१९७२ फेब्रुरवरी २९ (साँझ क्रमश)

**एक भारतीय सज्जन-** कस्ता कार्यले असल कर्म प्राप्त गर्न सकिन्छ?

**श्रील प्रभुपाद—** असल कर्मको अर्थ वेदमा सिफारिस गरिएका कर्म हुन्। विशेष गरेर त्यहाँ प्रत्येकले यज्ञ गर्नु भनिएको छ। यज्ञको अर्थ त्यस्तो कार्य, जसले भगवान् श्रीविष्णुलाई सन्तुष्टि प्रदान गर्दछ। यसरी, असल कर्मको अर्थ वैदिक साहित्यमा सिफारिस गरिएको यज्ञ सम्पन्न गर्नु हो।

कानुनको पालना ठीकसँग गर्ने नागरिक त्यो हो, जसका कार्यले सरकार सन्तुष्ट हुन्छ। यसरी असल कर्म त्यही हो, जसले भगवान् विष्णु सन्तुष्ट हुनुहुन्छ। दुर्भाग्यवश आधुनिक मानिसलाई भगवान् को हुनुहुन्छ त्यस सम्बन्धी जानकारी नै छैन भने उहाँलाई सन्तुष्ट गर्ने बारेमा के नै भन्ने। तिनीहरू केवल भौतिक क्रियाकलापमा नै व्यस्त छन्। त्यसकारण, तिनीहरू सबैले खराब कर्म गरिरहेका छन् र त्यसबाट दुःख पीडा भोगिरहेका छन्। तिनीहरू अन्धोले अन्धोलाई डोऱ्याए जस्तै छन्। त्यसैले, खराब कर्मका कारण दुःख भोगिरहेका छन्। यो बुझ्न धेरै सजिलो छ। यदि कुनै अपराध गऱ्यौ भने तिमीले दुःख पाउँछौ। यदि तिमीले राज्यका लागि जनताका लागि हित हुने काम गऱ्यौ भने तिम्रो सम्मान हुन्छ र कहिलेकाहीँ पदवी पनि प्रदान गरिन्छ। यो नै असल र खराब कर्म हो। असल कर्मबाट तिमीले केही भौतिक सुख भोग्दछौ र खराब कर्मबाट भौतिक दुःखको पीडा भोग्दछौ। असल कर्मबाट तिमी राम्रो परिवार, धनी र प्रशस्त धन भएको परिवारमा जन्म लिन्छौ। त्यसपछि तिमी विद्वान बन्दछौ र सुन्दर पनि हुन्छौ।

**बब—** जुन व्यक्ति भगवान्प्रति सचेत छैन, उसको अवस्था कस्तो हुन्छ, तर ..

**श्रील प्रभुपाद—** ऊ पशु हो। व्यक्ति, जसलाई भगवान्सम्बन्धी ज्ञान छैन, भगवान्का बारेमा जान्ने प्रयास गर्दैन, ऊ पशु नै हो।

**बब—** अवोध जनताको अवस्था के हुन्छ ?

**श्रील प्रभुपाद—** पशु पनि धेरै अवोध नै हुन्छ। यदि तिमीले उसको गर्दन काट्यौ भने पनि उसले विरोध गर्दैन। त्यसैले, अवोध हुनु कुनै राम्रो योग्यता वा गुण होइन। सबै पशु अवोध हुन्छन्। त्यसकारण तिमीलाई तिनीहरूको गर्धन काट्ने अवसर प्राप्त हुन्छ। त्यसैले अबोध हुनु धेरै राम्रो गुण होइन। हाम्रो प्रस्ताव वा विचार के हो भने मानिस धेरैधेरै बुद्धिमान हुनुपर्दछ, जसले गर्दा उसले भगवान् श्रीकृष्णलाई बुझ्न सकोस्। अबोध, अज्ञान, साधारण हुनु धेरै राम्रो गुण होइन। साधारण हुनु ठिकै हो, तर बुद्धिहीन हुनु राम्रो होइन।

**बब—** बुद्धिमत्ता के हो ? मलाई भनिदिनुहोस्।

**श्रील प्रभुपाद—** बुद्धिमत्ता भनेको त्यो हो जसबाट व्यक्ति के हो ? संसार के हो ? भगवान् को हुनुहुन्छ ? र, हामी बीचको सम्बन्ध के हो ? जान्न सकिन्छ। पशुलाई आफू को हो भन्ने ज्ञान हुँदैन। उसले आफू एउटा शरीर हुँ भन्ने सोच्दछ। त्यसरी नै जसले आफू को हो भन्ने जान्दैन, ऊ बुद्धिमान होइन।

**बब—** व्यक्ति जो जे भएपनि राम्रो छ त्यसले कार्य गर्ने प्रयास गर्दछ र आफ्नो कार्यप्रति कर्तव्यनिष्ठ छ, उसको अवस्था के हुन्छ ? जस्तै तर यदि ऊ इमानदार नभए पनि, उसलाई कसैले समात्न सक्दैन भनेर जानेर पनि कुनै सेवक आफ्नो स्वामी प्रति इमानदार हुन्छ। यदि यस्तो व्यक्ति जसरी पनि इमानदार भइ रहे के यो एक प्रकारको असल कर्म हो ?

**श्रील प्रभुपाद—** हो, इमानदार हुनु पनि असल कार्य हो। भगवद्गीतामा कसरी राम्रो व्यक्ति बन्न सकिन्छ, त्यसबारेमा वर्णन गरिएको छ- **दैवी सम्पद्विमोक्षाय निबन्धायासुरी मता।** यदि तिमी दैवी सम्पद दिव्य

गुणले युक्त भएर योग्य भयौ भने तिमीले मुक्ति प्राप्त गर्दछौ। यदि **निबन्धायासुरी** अर्थात् तिमीमा राक्षसी गुण छन् भने तिमी अरू बढी फस्दछौ वा बन्धनमा पर्दछौ। दुर्भाग्यवश आधुनिक मानिसलाई मोक्ष के हो बन्धन वा पस्नु के हो त्यसबारेमा जानकारी छैन। तिनीहरू यति आज्ञाकारी छन्, तिनीहरूलाई केही पनि थाहा छैन। यदि मैले तिमीलाई मुक्ति के हो भनेर सोधेँ भने के तिमीले उत्तर दिन सक्दछौ? (उत्तर आउँदैन) यदि बन्धन के हो भनेर सोधे तिमी उत्तर दिन सक्दछौ? (पुनः उत्तर आउँदैन) मुक्ति र बन्धन यी दुई शब्द वैदिक साहित्यमा उल्लेख छन्। तर, वर्तमान समयमा मानिसलाई ती शब्दको अर्थ के हो थाहा नै छैन। तिनी अज्ञानी र मूर्ख छन् तैपनि आफ्नो ज्ञानको विकास प्रति घमण्ड गर्दछन्। तिमी अध्यापक, शिक्षक हौ। के तिमी मुक्तिका बारेका केही भन्न सक्दछौ?

**बब—** पर्याप्त व्याख्या गर्न सक्दिनँ, किनभने यदि मैले व्याख्या गर्न सक्ने भए म धेरै छिटो मुक्त हुने थिएँ।

**श्रील प्रभुपाद—** यदि तिमीलाई मुक्ति के हो भन्ने जानकारी नै छैन भने त्यहाँ छिटो र ढिलो मुक्तिको प्रश्न कहाँ हुन्छ? सर्वप्रथम तिमीले मुक्ति के हो भन्ने जान्नुपर्दछ। यदि तिमीलाई कुनै रेल कहाँ जान्छ भन्ने जानकारी नै छैन भने त्यो रेल छिटो वा ढिलो जान्छ भनेर जान्नुको के अर्थ हुन्छ? त्यसैले, मुक्ति के हो? तिमी दिनहुँ मलाई सोध्दछौ अब म तिमीलाई सोध्दै छु।

**बब—** (हाँस्दछन्) ए, मलाई केही क्षण सोच्न दिनुहोस्।

**श्रील प्रभुपाद—** श्रीमद्भागवतमा मुक्तिको बारेमा वर्णन गरिएको छ। मुक्ति संस्कृत शब्द हो। श्रीमद् भागवतमा **मुक्तिर्हित्वान्यथा रुपं स्वरुपेण व्यवस्थिति**। मानिसले सबै प्रकारका मूर्खतापूर्ण कार्य बन्द गर्नुपर्दछ र आफ्नो मूल अवस्थामा स्थित हुनु पर्दछ, त्यो नै मुक्ति हो। दुर्भाग्यवश वर्तमान समयमा आफ्नो मूल अवस्था के हो वा त्यस अवस्थामा कसरी सही कार्य गर्ने भन्ने जानकारी नै छैन। आधुनिक

जनता आफ्नो जीवनका बारेमा अनभिज्ञ छन् यो ज्यादै अनुपयुक्त वा अकुश अवस्था हो। उनीहरूलाई यसको जानकारी नै छैन।

**बब—** को इमानदार छ, मलाई भनिदिनुहोस् ?

**श्रील प्रभुपाद—** यदि कसैलाई इमानदारीका बारेमा जानकारी छैन भने ऊ कसरी इमानदार हुन सक्दछ ? तर, यदि तिमीलाई इमानदारिताको बारेमा ज्ञान छ भने तिमी इमानदार हुन सक्दछौ। इमानदारिता के हो ? सर्वप्रथम त्यसको व्याख्या गर

**बब—** आफूलाई के ठीक लाग्दछ त्यो गर्नु नै इमानदारीता हो भन्ने म ठान्दछु।

**श्रील प्रभुपाद—** एउटा चोरले- "मेरो सन्तानका लागि मैले चोर्नुपर्दछ यो ठीक हो" भन्ने ठान्दछ। के यसको अर्थ त्यो इमानदार हो ? कसाइले सोच्दछ- "मैले दिनहुँ पशुको घाँटी काट्नुपर्दछ, मेरो जीवन यसैबाट यापन हुन्छ।" एकपटक नारद मुनिले एउटा व्याधालाई भेट्नुभयो र उसलाई सोध्नुभयो, "तिमीले यसरी किन मारिरहेका छौ ?" उसले उत्तर दियो— "अहो! यो मेरो व्यापार हो। मेरा पिताले मलाई यो सिकाउनुभएको हो।" व्याधाले आफ्नो कार्य इमानदारिपूर्वक गरिरहेको थियो। यसरी इमानदारिताको अनुभव संस्कृतिमा निर्भर गर्दछ। चोरको संस्कृति हाम्रोभन्दा भिन्न छ र उसले चोर्नु नै इमानदारिता हो भन्ने सोच्दछ।

**बब—** त्यसो हो भने इमानदारिता के हो ?

**श्रील प्रभुपाद—** हो, मेरो प्रश्न नै त्यही हो। (सबै हाँस्दछन्)। अन्य कसैको सम्पत्ति अतिक्रमण नगर्नु नै सही इमानदारिता हो। उदाहरणका लागि, यो मेरो टेबल हो। यदि तिमीले लिएर जान चाह्यौ भने के यो इमानदारिता हो ? त्यसकारण इमानदारिताको साधारण परिभाषा भनेको अरूको अधिकारमा अतिक्रमण नगर्नु नै हो। त्यो नै इमानदारिता हो।

**बब—** त्यसो हो भने जुन व्यक्ति इमानदार छ ऊ सत्त्व गुणमा हुन्छ, के त्यो ठीक हो ?

**श्रील प्रभुपाद—** निश्चय नै, निश्चय नै। किनभने सत्त्व गुणको अर्थ नै ज्ञान हो। यदि तिमीले "यो मेरो टेबल होइन, स्वामीजीको हो भन्ने जान्यौ भने यो तिमीले लैजाने प्रयास नै गर्दैनौ। त्यसकारण, मानिसले जान्नुपर्दछ, वस्तु कसको हो भनेर अनि मात्र ऊ इमानदार बन्न सक्दछ।

**बब—** सत्त्व गुण भनेको भगवान्‌को ज्ञान हो भनेर तपाईंले भन्नुभएको थियो। तर कुनै व्यक्ति इमानदार हुन सक्दछ, तर ऊसँग भगवान् सम्बन्धी ज्ञान नहुन पनि सक्दछ। विनासोच नै भगवान्‌को इच्छाले तिनीहरू इमानदार हुन्छन्, आफू इमानदार छु भन्ने तिनीहरूले सोच्दछन्।

**श्रील प्रभुपाद—** प्रत्येक व्यक्ति इमानदार हुनुपर्दछ भन्ने भगवान्‌को कामना हुन्छ। भगवान्‌ले विपरीत किन सोच्नुपर्‍यो ?

**बब—** के तपाईंले भगवान्‌का इच्छाहरू आफूले भगवान्‌का इच्छाको पालना गरेको छु भन्ने नजानेर पनि, पालना गर्न सक्नुहुन्छ ?

**श्रील प्रभुपाद—** सक्दिनँ, नजानेर पनि पालना गर्नु भनेको अर्थहीन वा हास्यास्पद हो। भगवान्‌को आदेश के हो, त्यो तिमीले थाहा पाउनुपर्दछ र यदि तिमीले त्यसको पालना गर्‍यौं भने त्यो इमानदारिता हो।

**बब—** त्यसको अर्थ, भगवान्‌लाई नजानेसम्म कोही पनि सही इमानदार बन्न सक्दैन ?

**श्रील प्रभुपाद—** हो, सक्दैन। किनभने भगवान् परमस्वामी, परमभोक्ता र परममित्र हुनुहुन्छ। भगवद्गीताको भनाई पनि यही हो। यदि कसैले यी तीन कुरा जान्दछ भने ऊ पूर्ण ज्ञानले युक्त हुन्छ। यी तीन कुरा भगवान् सम्पूर्ण वस्तुका स्वामी हुनुहुन्छ, भगवान् सबैका मित्र हुनुहुन्छ र भगवान् सबै कुराका भोक्ता हुनुहुन्छ भन्ने हुन्। उदाहरणका लागि शरीरका हात, गोडा, कान र आँखा भोक्ता होइन, पेट भोक्ता हो भन्ने कुरा सबैलाई थाहा भएको नै हुन्छ। यी केवल पेटका सहयोगी मात्र हुन्। उदाहरणका लागि आँखा गिद्ध सात माइल माथि केवल पेटका लागि भोजन खोज्नका लागि उड्दछ। होइन र ?

**बब**— त्यो त हो।

**श्रील प्रभुपाद**— पखेटाले उडाउँदछ र पञ्जाले भोजन समात्दछ। त्यसरी नै, यस शरीरको भोक्ता पेट हो र यस सम्पूर्ण प्रकट सृष्टिको त्यो भौतिक र आध्यात्मिक जगतमा सबैको केन्द्रीय स्वरूप भगवान् श्रीकृष्ण हुनुहुन्छ र उहाँ नै भोक्ता हुनुहुन्छ। यो कुरालाई हामीले आफ्नो शरीरको अवधारणाबाट बुझ्न सक्दछौं। यो शरीर पनि एउटा सृष्टि हो। यो सम्पूर्ण ब्रह्माण्डमा जस्तै यो शरीरमा पनि तिमीले समान यान्त्रिक स्वभाव देख्न सक्दछौं। यस्तै समान यान्त्रिक व्यवस्था जहाँपनि र पशुमा पनि देख्न सक्दछौ। मानव शरीरमा र प्रकट ब्रह्माण्डमा करिब करिब समान व्यवस्था छ। यसरी तिमीले यस शरीरमा, अन्य शरीरमा र तिम्रो शरीरमा पेट नै भोक्ता रहेछ भन्ने कुरा सजिलै बुझ्न सक्दछौ। त्यहाँ केन्द्रीय भोक्ता हुन्छ। पेट हाम्रो मित्र पनि हो। किनभने यदि तिमीले भोजन पचाउन सकेनौ भने तिम्रा शरीरका सबै अवयव कमजोर हुन्छन्। त्यसकारण पेट मित्र पनि हो। यसले पचाएर शरीरका सम्पूर्ण अवयव वा अंगहरूमा शक्ति वितरण गर्दछ। यस्तै होइन?

**बब**— यस्तै हो।

**श्रील प्रभुपाद**— त्यसरी नै सम्पूर्ण सृष्टिको केन्द्रीय पेट भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। उहाँ नै भोक्ता, मित्र र परमस्वामी हुनुहुन्छ। उहाँले नै सबैको पालन गर्नुहुन्छ, जसरी राजा सबैका स्वामी भएकाले सम्पूर्ण देशवासीको पालना गर्दछ। स्वामी नभएसम्म कोही प्रत्येकको मित्र कसरी बन्न सक्दछ?

यी सबैकुरा बुझ्नुपर्दछ। भगवान् श्रीकृष्ण परम भोक्ता भगवान् श्रीकृष्ण परम स्वामी र भगवान् श्रीकृष्ण परम मित्र हुनुहुन्छ। यदि तिमीले यी तीन कुरा जान्यौ भने तिम्रो ज्ञान पूर्ण हुन्छ तिमीलाई अन्य कुरा जान्ने आवश्यकता पर्दैन। यस्मिन् विज्ञाते सर्वमेवं विज्ञातं भवति। यदि तिमीले यो सूत्रबाट भगवान् श्रीकृष्णलाई बुझ्न सक्यौ भने तिम्रो ज्ञान पूर्ण हुन्छ।

तिमीलाई अरू ज्ञानको आवश्यकता हुँदैन। तर, मानिस यस कुरामा सहमत हुँदैनन्। भगवान् श्रीकृष्ण किन स्वामी हुने? हिटलर स्वामी हुन पर्दछ, निक्सन ....." यसरी अघि बढ्दछन्। त्यसकारण, तिमी समस्यामा पर्दछौ। तर, यदि तिमीले यी तीन कुरा जान्यौ भने तिम्रो ज्ञान पूर्ण हुन्छ। तर, हामी यो स्वीकार गर्दैनौं। हामी यी तीन कुरा बुझ्नका लागि अन्य धेरै बाधा अवरोध अघि सार्दछौं अनि त्यसले हामीमा समस्या उत्पन्न गराउँदछ। तर, भगवद्गीता (५.२९) मा भनिएको छ-

*भोक्तारं यज्ञतपसां सर्वलोकमहेश्वरम्।*
*सुहृदं सर्वभूतानां ज्ञात्वा मां शान्तिमृच्छति।।*

"मलाई नै सम्पूर्ण यज्ञ र तपस्याका परमभोक्ता जानेर, मलाई नै सबै लोकहरू र देवताहरूका परम स्वामी मानेर र मलाई नै सम्पूर्ण प्राणीका उपकारी तथा हितैषी ठानेर, मेरो भावनाले पूर्ण भएको व्यक्तिले भौतिक कष्टहरूको पीडाबाट शान्ति प्राप्त गर्दछ।" तर, हामी यो स्वीकार गर्दैनौं। हामीले अन्य धेरै कृत्रिम स्वामीहरू, कृत्रिम मित्रहरू, कृत्रिम भोक्ताहरू बनाउँदछौं। तिनीहरू एक आपसमा झगडा गर्दछन्। संसारको यस्तो अवस्था छ। मानिसले यो ज्ञान स्वीकार गरे तुरुन्त शान्ति हुन्छ (**शान्तिमृच्छति**) यो नै ज्ञान हो। यदि कसैले यो सिद्धान्तको अनुसरण गर्दछ ऊ नै इमानदार हो। उसले "यो मेरो हो" भनेर दाबी गर्दैन। "सबै वस्तु भगवान् श्रीकृष्णका हुन्। त्यसैले, सबै वस्तु भगवान् श्रीकृष्णको सेवामा प्रयोग गर्नुपर्दछ" भनेर उसले जानेको हुन्छ। त्यो नै इमानदारिता हो। यदि यो कलम मेरो हो भने मेरो शिष्यको आचरण यस्तो हुनुपर्दछ कि उसले "के म यो कलम प्रयोग गर्न सक्दछु?" भनेर सोध्नुपर्दछ, अनि "प्रयोग गर" भनेर मैले उत्तर दिन्छु।

त्यसरी नै यदि मलाई सबै वस्तु भगवान् श्रीकृष्णका हुन् भन्ने ज्ञान छ भने, मैले उहाँको अनुमतिविना कुनै पनि वस्तु प्रयोग गर्दिनँ। यो नै इमानदारिता हो र यो नै ज्ञान हो। जसले यो जान्दैन, त्यो अज्ञानी र मूर्ख

हो। व्यक्ति नै मूर्ख हुन्छन्। अज्ञानले नै व्यक्तिले कानुनको उल्लघंन गर्दछ। अज्ञान आनन्द होइन। जहाँ अज्ञानलाई आनन्द भनिन्छ, त्यहाँ विद्वान् हुनु पनि मूर्खता वा अदूरदर्शिता नै हो र त्यो नै समस्या हो। सम्पूर्ण विश्व अज्ञानतामा आनन्द लिइरहेको छ। जब तिमी कृष्ण भक्तिको कुरा गर्दछौ तिनीहरूले त्यति प्रशंसा गर्दैनन्। यदि मैले "भगवान् श्रीकृष्ण स्वामी हुनुहुन्छ, तिमी स्वामी होइनौ" भने तिमी त्यो कुराले सन्तुष्ट हुँदैनौ। (सबै हाँस्दछन्) हेर त अज्ञान नै आनन्द भएको। सही सत्य भन्नु नै मेरो मूर्खता हो। त्यसकारण, जहाँ अज्ञानतालाई आनन्द ठान्दछन्, त्यहाँ विद्वान् हुनु पनि मूर्खता नै हो। हामीले अप्रसन्न गराउने खतरा लिइरहेका छौं, तर उनीहरू हामीलाई मूर्ख ठानिरहेका छन्। यदि मैले कुनै धनी व्यक्तिलाई "तिमी स्वामी होइनौं, भगवान् श्रीकृष्ण स्वामी हुनुहुन्छ। त्यसैले, तिमीसँग जेजति धन छ, त्यो भगवान् श्रीकृष्णकालागि खर्च गर" भने ऊ मसँग रिसाउँदछ। उपदेशो हि मूर्खाणां प्रकोपाय न शान्तेय। "यदि तिमीले मूर्खलाई उपदेश दियौ भने ऊ रिसाउँदछ।" त्यसकारण हामीहरू भिक्षा माग्ने जस्तो भएर जान्छौं- "हे प्रिय महाशय ! तपाईं असल व्यक्ति हुनुहुन्छ। म भिक्षा माग्ने संन्यासी हुँ। म एउटा मन्दिर निर्माण गर्न चाहन्छु मलाई केही धन दिनुहुन्छ?" अनि उसले सोच्दछ "ए यो एउटा भिक्षा माग्ने व्यक्ति रहेछ केही रकम दिउँ।" (सबै हाँस्दछन्) तर यदि मैले "प्रिय महाशय ! तपाईंसँग लाखौं डलर छ त्यो भगवान् श्रीकृष्णको धन हो। म भगवान् श्रीकृष्णको सेवक हुँ त्यो धन मलाई दिनुहोस्।" त्यसो भने उसले मलाई धपाउँदछ। (सबै हाँस्दछन्) ऊ धेरै सन्तुष्ट हुँदैन तर म भिक्षुक जस्तो भएर गएँ भने उसले केही रकम दिन्छ। यदि मैले सहि कुरा भने उसले मलाई केही पनि दिन्न। (सबै हाँस्दछन्) हामी भिक्षुक होइनौं भगवान् श्रीकृष्णका सेवक हौं। हाम्रालागि हामीले अन्यबाट केही पनि चाहदैनौं किनभने भगवान् श्रीकृष्णले हामीलाई सबै कुरा उपलब्ध गराउनुहुन्छ। यो नै ज्ञान हो। उदाहरणका लागि कहिलेकाहीँ बच्चाले सय रूपियाँको

नोटलिन्छ अनि हामीले उसलाई फकाउँदै "अहो तिमी कति राम्रो छौ ! यो मिठाइ खाऊ, त्यो कागज मलाई देऊ यो केही पनि होइन कागज मात्र हो" भन्दछौं। उसले "हो यो लिनुहोस् भन्दछ। अनि उसले दश पैसाको मिठाइ लिएर सय रूपियाँको नोट फिर्ता दिन्छ। हामीले यसरी मानिससँग भिक्षा माग्न पर्दछ। किन माग्नुपर्दछ? किनभने भगवान् श्रीकृष्णको धन लियो भने त्यो व्यक्ति नर्क जानुपर्दछ। जसरी हुन्छ, उसबाट केही रकम लिएर सो धन कृष्णभावनामृत आन्दोलनमा प्रयोग गर।

**बब—** त्यसो गरे नर्क जानुपर्दैन?

**श्रील प्रभुपाद—** हो, जानुपर्दैन। तिमीले उसलाई नर्क जानबाट बचाउँदछौ। किनभने उसले भगवान् श्रीकृष्णका लागि गरेको खर्चको हिसाब उहाँले राख्नुहुन्छ— "अहो ! यसले केही रकम दिएको छ" यसलाई अज्ञानता सुकृति भनिन्छ। अर्थात् नजानेर गरिएको भक्तिमय सेवा भनिन्छ। साधारण मानिसहरू आफ्ना विचार प्रति सशक्त हुँदैनन्, त्यसकारण सन्त व्यक्तिले तिनीहरूलाई केही प्रबुद्ध बनाएर भगवान् श्रीकृष्णको सेवा गर्ने अवसर प्रदान गर्नेतर्फ लैजान्छन्। सन्त व्यक्तिको कर्तव्य नै यही हो। तर, यदि कसैले अन्यको धन लगेर आफ्नो इन्द्रिय तृप्तिमा खर्च गर्‍यो भने नर्क जान्छ, अनि उसको विनाश हुन्छ। ऊ ठग हो ऊ अपराधी हो। तिमीले अन्यको धन ल्याएर आफ्ना इन्द्रियतृप्तिका लागि खर्च गर्नुहुँदैन।

**बब—** मैले कृष्णभक्त नभएका केही व्यक्ति चिन्दछु।

**श्रील प्रभुपाद—** कृष्णको अर्थ भगवान् हो।

**बब—** तिनीहरू अलिकति ईश्वरभक्त छन् तैपनि तिनीहरू अलिकति इमानदार छन्, तिनीहरूले अरूबाट केही लिदैनन्। उनीहरू अरूप्रति इमानदार हुने प्रयास गर्दछन्।

**श्रील प्रभुपाद—** तिनीहरूले अरूबाट केही लिँदैनन्, तर भगवान् श्रीकृष्णबाट लिन्छन्।

**बब—** त्यसो हो भने तिनीहरू अर्ध असल हुन् ?

**श्रील प्रभुपाद—** असल होइनन्। यदि तिनीहरूले भगवान् स्वामी हुनुहुन्छ भन्ने सिद्धान्त जान्न सक्दैनन् भने तिनीहरू असल हुन सक्दैनन्।

**बब—** म ती गरिब व्यक्तिहरू, जसलाई धनको आवश्यकता छ, तर त्यो प्राप्त गर्नका लागि कुनै अपराध गर्दैनन् तिनीहरूका बारेमा सोच्दछु। तिनीहरूका नजिकका सबैले चोरी गर्दछन्, तर तिनीहरू चोरी नगरी बस्दछन्। ती व्यक्तिहरूलाई पनि कुनै दिन राम्रो हुने अधिकार छ।

**श्रील प्रभुपाद—** तर, जसले मैले चोरी गरिरहेको छैन भन्ने सोच्दछ ऊ पनि चोर नै हो, किनभने उसलाई सबै वस्तु भगवान् श्रीकृष्णका हुन् भन्ने जानकारी नै छैन। त्यसकारण, उसले जे-जे वस्तु स्वीकार गर्दछ, त्यो सबै चोरेको हुन्छ।

**बब—** के ऊ कम चोर हो ?

**श्रील प्रभुपाद—** हुन सक्दछ। तिमीलाई यो सलको स्वामी म हुँ भन्ने जानकारी नहुन सक्दछ, तर यदि तिमीले यो लग्यौ भने के तिमीले चोरेको हुँदैन ?

**बब—** तर यदि मलाई यो सल तपाईंको हो भन्ने थाहा नपाएर लैजाँदा भन्दा थाहा पाएर पनि लगेँ भने म निकृष्ट चोर हुन्छु। मैले यो कसैके पनि होइन भनेर पनि लैजान सक्दछु।

**श्रील प्रभुपाद—** त्यो पनि चोरी नै हो, किनभने कसैको हुनै पर्दछ। तिमीले उसको अनुमतिविना लिएर गयौ। यसको स्वामी को हो भन्ने तिमीलाई निश्चित नहुन सक्दछ तर या कसैको हो भन्ने तिमीलाई थाहा हुनुपर्दछ। कहिलेकाहीँ हामीले सडक मर्मत वा विद्युत मर्मतका लागि सरकारी धेरै बहुमूल्य वस्तु बाटोमा राखेका देखेका छौँ। कसैले "अहो ! भाग्यवश, यी वस्तु यसै यहाँ पालिएका रहेछन्, मैले लैजानु पर्‍यो" भनी सोच्दछन् भने के त्यो चोरी होइन ?

**बब—** त्यो चोरी नै हो।

**श्रील प्रभुपाद—** हो, उसलाई त्यो सरकारी सम्पत्ति हो भन्ने जानकारी नै छैन। उसले त्यो सबै लैजान्छ। त्यो चोरी नै हो। जब प्रक्राउ पर्दछ, उसलाई सजाय हुन्छ। त्यसरी नै तिमीले जेजति संकलन गरिरहेका छौ, अनुमान गरौं तिमीले खोलाबाट एक गिलास पानी पिएका छौ भने के त्यो खोला तिम्रो सम्पति हो ?

**बब—** होइन।

**श्रील प्रभुपाद—** त्यसो हो भने ? त्यो पनि चोरी हो। तिमीले खोलाको सृष्टि गरेका होइनौ। तिमीलाई त्यसको स्वामी को हो थाहा छैन तर त्यो तिम्रो सम्पत्ति होइन। यसरी, तिमीले यो कसको सम्पत्ति हो भन्ने नजानेर भएपनि एक गिलास पानी पियौ भने तिमी चोर नै हौ। तिमीले सोच्न सक्दछौं "म इमानदार छु" तर वास्तवमा तिमी चोर नै हौ। तिमीले भगवान् श्रीकृष्णको स्मरण गर्नु नै पर्दछ। "अहो ! भगवान् श्रीकृष्ण ! यो हजुरको सृष्टि हो। कृपापूर्वक मलाई यो पिउन दिनुहोस्" यो इमानदारिता हो। त्यसकारण, भक्तहरूले सधैँ भगवान् श्रीकृष्णको स्मरण गरिरहन्छन्। सबै क्रियाकलापमा "यी सबै कृष्ण हुनुहुन्छ" भन्ने सोच्दछन्, यो नै इमानदारिता हो। कृष्णभक्तिविनाका सबै दुष्ट, चोर, डाँका र धूर्त नै हुन्।

त्यसकारण, हाम्रो निष्कर्ष भनेको जसले भगवा्न श्रीकृष्णलाई बुझ्न सक्दैन उसको कुनै राम्रो गुण हुँदैन। त्यसकारण, ऊ निम्नस्तरको व्यक्ति हो र त्यो तथ्य पनि हो। अब तिमीले ज्ञान के हो र इमानदारिता के हो बुझ्यौ होला ?

**बब—** केही हदसम्म।

**श्रील प्रभुपाद—** के अन्य उपाय वा परिभाषा छन् ? (बब हाँस्दछन्) के अन्य उपाय छन् ? चुनौती देऊ (बब फेरि हाँस्दछन्, प्रभुपाद पनि हाँस्नुहुन्छ), के अन्य विकल्प छ ? कसैले पनि केही कुरामा चुनौती दिन सक्दैन भनेर हामी भन्दैनौं, त्यसको अनुभव हामीसँग छ। हामी अरू प्रश्न छन ?" भनेर चुनौती दिन्छौं। हालसम्म भगवान् श्रीकृष्णले

हामीलाई संरक्षण गर्नुभएको छ। ठुलाठुला देशमा ठुलाठुला समारोहमा सम्बोधनपश्चात् मैले "केही प्रश्न छन्?" भनेर सोध्दछु।

**बब—** अब मसँग केही पनि छैन।

**श्रील प्रभुपाद—** लण्डनको कन्वेहलमा बाह्रदिनसम्म मेरो प्रवचन भएको थियो। प्रत्येक कार्यक्रम पश्चात मैले "अरू प्रश्न छन्" भनेर सोध्दथे।

**बब—** के धेरै प्रश्न पाउनुभयो?

**श्रील प्रभुपाद—** ए अँ पाएँ। तर, धेरैजसो मूर्खतापूर्ण प्रश्न थिए।

**बब—** मलाई अरू प्रश्न सोध्न दिनुहोस्। मूर्ख कसलाई भनिन्छ?

**श्रील प्रभुपाद—** जसमा ज्ञान छैन, उसलाई मूर्ख भनिन्छ।

**भारतीय सज्जन—** प्रभुपाद मसँग व्यक्तिगत प्रश्न छ, सोध्न सक्दछु?

**श्रील प्रभुपाद—** हुन्छ

**भारतीय सज्जन—** केही समय अघि कलकत्तामा "पशुहरूप्रतिको क्रूरताको सप्ताह" नारासहित एक हप्ताको कार्यक्रम भएको थियो।

**श्रील प्रभुपाद—** ए यो अर्को मूर्खतापूर्ण कार्य हो। तिनीहरू क्रूरता रोक्ने विज्ञापन गर्दछन्। साथै सयौं हजारौं वधशाला पनि सञ्चालन गर्दछन्। हेर त? त्यो अर्को मूर्खतापूर्ण कार्य हो। तिनीहरू निरन्तर पशुप्रति क्रुरता गर्दछन्, अनि क्रूरता रोक्ने समाज पनि बनाउँदछन्। यसको अर्थ चोरको समूहले आफूलाई असल मानिसको समूह भने जस्तै हो।

**भारतीय सज्जन—** म के सोध्न चाहन्छु भने ........

**श्रील प्रभुपाद—** तिमीले प्रश्न सोध्नुअघि नै म उत्तर दिन्छु। जब पशुलाई ठिकसँग पाल्ने कार्य हुँदैन, त्यो नै क्रूरता हो भन्ने तिनीहरूको दर्शन छ। त्यसकारण, तिनीहरूलाई भोकै राख्नु भन्दा मार्नु वेश भन्दछन्। त्यो नै तिनीहरूको सिद्धान्त हो, होइन?

**बब—** हो।

**श्रील प्रभुपाद—** तिनीहरू भन्दछन्, यसलाई यसरी दुःख र पीडासहित

बाँच्न दिनुभन्दा मार्नु वेश हुन्छ।" यस्तै सिद्धान्त कम्युनिष्ट देशमा पनि छ। वृद्ध मानिस वा हजुरबावाले दुःख पाएका छन् भने उनी मर्नु वेश हो भन्दछन्। अफ्रिकामा एक वर्गका मान्छेको समूहमा आफ्ना हजुरबुवा आमालाई मार्ने उत्सव हुन्छ।

**एक भक्त—** मेरा काका र काकी सैनिक हुनुहुन्थ्यो। जब उहाँहरू अर्को देश जानभयो, आफ्नो कुकुरसँगै लिएर जान सक्नुभएन। उहाँहरूले भन्नुभयो— "हामीबिना यो अवोध कुकुरको हृदय दुःखित हुने भयो।" त्यसैले, सुताएर मार्नुभयो।

**श्रील प्रभुपाद—** एक पटक गान्धीले पनि गाईको बाच्छो मार्नुभयो, किनभने ऊ दुःखले ज्यादै पीडित थियो। उहाँले आदेश दिनुभयो "यसले दुःख पाउनुभन्दा यसलाई मार।"

**गिरिराज—** हिजो तपाईँले गुरुले आफ्ना शिष्यहरूको पापकर्मका कारण दुःख पाउँदछन् भन्नुभयो। पापकर्म भन्नाले के भन्न खोज्नुभएको हो?

**श्रील प्रभुपाद—** दीक्षाको समयमा तिमीले प्रतिज्ञा गरेका थियौ— "म नियमका विधिको पालना गर्नेछु।" यदि तिमीले त्यसको पालना गरेनौ भने त्यो पापकर्म हो। ज्यादै सरल छ। तिमीले आफ्नो प्रतिज्ञा उल्लघंन गऱ्यौ खराब काम गऱ्यौ त्यसकारण तिमी पापी भयौ, त्यसै होइन?

**गिरीराज—** हो। तर, हामीलाई केही कार्य गर्ने निर्देश गरिएको हुन्छ। हामीले त्यो कार्य गर्ने प्रयास गर्दा पनि ठिकसँग गर्न सक्दैनौं।

**श्रील प्रभुपाद—** तिमीले प्रयास गरे पनि ठिकसँग गर्न सक्दैनौ? यो कसरी हुन सक्दछ?

**गिरीराज—** जस्तै ध्यानपूर्वक जप गर्नु। कहिलेकाहीँ हामी प्रयास गर्दछौं तर

**श्रील प्रभुपाद—** ए त्यो दोष होइन। अनुमान गर, तिमीले केही कार्य गर्ने प्रयास गर्दछौ, तर तिमी अनुभवहीनताका कारण असफल हुन्छौ। त्यो तिम्रो दोष होइन। तिमीले प्रयास गरेका थियौ। भागवतको एउटा श्लोकमा

भनिएको छ, यदि भक्तले आफ्नो सामर्थ्य अनुसार राम्रो गर्ने प्रयास गरिरहेको छ, तर आफ्नो असक्षमताका कारण असफल भए भगवान् श्रीकृष्णले उसलाई क्षमा गरिदिनुहुन्छ। भगवद्गीतामा भगवान् श्रीकृष्ण भन्नुहुन्छ— **अपि चेत्सुदुराचारो भजते मामनन्यभाक्। साधुरेव समन्तव्यः** "अत्यन्त जघन्य कार्य गरे पनि यदि उसले अनन्यभावले मेरो पूजा उपासना गर्दछ भने उसलाई साधु मान्नुपर्दछ।" कहिलेकाहीँ आफ्ना पूर्व जन्मका खराब बानीका कारण नजानेर पनि मानिस मूर्खतापूर्ण कार्य गर्दछ। त्यसको अर्थ ऊ दोषी हो भन्ने हुँदैन। तर, उसले आफूले गरेको कार्य प्रति पश्चाताप गर्नुपर्दछ र पुनः त्यस्तो कार्य गर्न सकेसम्म रोक्ने प्रयास गर्नुपर्दछ। तर, वानी नै दोस्रो स्वभाव हो। कहिलेकाहीँ तिमीले कठिन प्रयास गर्दा पनि माया अति शक्तिशाली छिन्, उनले खाल्डोमा खसालिदिन्छिन्। त्यसलाई क्षमा गर्न सकिन्छ। भगवान् श्रीकृष्णले क्षमा गरिदिनुहुन्छ। तर, जसले जानीजानी त्यस्तो गर्दछ उसलाई क्षमा गरिँदैन। "म भक्त हुँ" भन्ने बलमा यदि मैले "म जप कीर्तन गर्दछु। त्यसैले, सबै प्रकारका मूर्खतापूर्ण कार्य गर्न सक्दछु र त्यसले निष्पल गर्दछ" भनेर सोच्दछु भने त्यो नै सबैभन्दा ठुलो अपराध हो।

८

# कृष्णभावनामा प्रगति

(पत्रको आदान प्रदान)

स्प्रिङफिल्ड, न्युजर्सी
१२ जुन, १९७२

आदरणीय प्रभुपाद,
हार्दिक नमस्कार !!

मैले न्यूयोर्कका भक्तहरूको संगत गरिरहेको छु। यस्ता उच्चस्तरका र मिलनसार भक्तहरूको संगतमा मैले पनि कृष्णभक्तिमा केही विकास गर्ने अपेक्षा गरेको छु। मसँग विवाह निश्चित गरिएकी युवती पनि मन्दिरमा जान सुरु गरिन् र केही माला जप पनि गर्दछिन्। मैले भारतबाट पत्र नपठाएको समयसम्म उनलाई कृष्णभावनामृतका बारेमा केही जानकारी थिएन। आत्रेय ऋषिले हामीलाई आफ्नो घरमा आमन्त्रण गरेर आर्दश गृहस्थ जीवन कस्तो हुन्छ, त्यसको अनुभव गराउनु भयो।

म अप्रिलको अन्त्यमा बम्बई गएँ र पिसकोर कार्यबाट निवृत्त भएँ। म सामान्य बिरामी भएँ र केही भाग्यशाली रहेँछु जसले गर्दा २ हप्ता बम्बईमा बस्न पाएँ। मैले जुहुका कृपालु र वरिष्ठ भक्तहरूसँग समय बिताएँ। दुर्भाग्यवश पाँच दिनअघि नै तपाईँ त्यहाँबाट गइसक्नुभएको रहेछ।

कृष्णभक्तिका बारेमा मैले धेरै कम बुझ्दछु तर मलाई कृष्णभक्तिको प्रक्रियामा पूर्ण विश्वास र श्रद्धा छ। त्यसैले, म यसलाई बढी अपनाउने छु भन्ने आशा गर्दछु। लसएन्जलसको मन्दिरका बारेमा आत्रेय ऋषिबाट विस्तृत कुरा बुझ्ने छु। न्युयोर्कमा तपाईँबाट पनि व्यक्तिगतरूपले केही सुन्ने आशा गरेको छु।

मजस्तो अयोग्य युवकका लागि तपाईँले गर्नुभएको कृपाका लागि धन्यवाद दिन चाहन्छु।

हृदयदेखि नै तपाईँको
बब कोहेन

अभयचरणारविन्द भक्तिवेदान्त स्वामी
इस्कोन, लस एन्जल्स
१६ जुन १९७२

बब कोहेन
स्प्रिङ्गफिल्ड, न्युजर्सी

मेरा प्रिय बब !

मेरो आशिष् स्वीकार गर। तिम्रो १२ जुन १९७२, को पत्रका लागि धन्यवाद दिन चाहन्छु। तिमीले प्रकट गरेका तिम्रा अभिप्राय आनन्दपूर्वक पढेँ। तिमीले हाम्रो संगत गरिरहेको सुनेर मलाई धेरै खुसी लाग्यो। तिमी बुद्धिमान् छौ तिम्रो व्यवहार सरल छ भन्ने कुरा म जान्दथेँ त्यसैले तिमीलाई भगवान् श्रीकृष्णले सबै प्रकारका आशिष् प्रदान गर्नुहुनेछ भन्ने कुरामा म विश्वस्त छु। अनि, तिमीले कृष्णभक्तिमा पूर्णरूपले खुसी भएको अनुभव गर्नेछौ।

व्यक्तिले भौतिक स्वभाव वा मायासँगको आसक्तिलाई स्वेच्छाले त्यागेर कृष्णभक्तिमा प्रगति गर्न सक्दछ। त्यस्तो त्यागलाई तपस्या भनिन्छ। तर, हामीहरू कुनै राम्रो कारणबिना नै तपस्या गर्न तीव्र इच्छुक हुन्छौं। त्यसकारण, तिमीजस्तै असल, जो वैज्ञानिक र दार्शनिक विचारले युक्त छ, उसले सर्वप्रथम दिव्य ज्ञानलाई बुझ्नुपर्दछ। यदि तिमीले ज्ञान प्राप्त गर्‍यौ भने तपस्या स्वत: आउँदछ अनि तिमीले आफ्नो आध्यात्मिक जीवनमा प्रगति गर्नेछौ। जसले आफ्नो जीवनको पूर्णता प्राप्त गर्ने आशा गर्दछ, उसले पहिला ज्ञान प्राप्त गर्नुपर्दछ। त्यसकारण, मैले तिमीलाई हाम्रा पुस्तक

सकेसम्म दिनहुँ अध्ययन गर्ने, विषयवस्तुलाई विभिन्न दृष्टिकोणबाट बुझ्ने प्रयास गर्ने र न्युयोर्क मन्दिरका भक्तहरूसँग निरन्तर छलफल गर्ने सुझाव दिएको थिएँ। यस्तो गरेपछि बिस्तारै तिमी विश्वस्त हुन्छौ र तिम्रो निष्कपट भाव एवम् भक्तिमय सेवाबाट तिमीले प्रगति गर्नेछौ।

हो, मप्रति र कृष्णभावनामृत प्रक्रियाप्रति विश्वास हुनु भनेको वास्तविक ज्ञान पाउने पहिलो आवश्यकता हो यदि विश्वास छ भने बुझ्न सम्भव हुन्छ। जब बुझ्ने शक्तिको विकास हुन्छ अनि मायाशक्तिप्रतिको विरक्तिको पनि वृद्धि हुन्छ। जब तिमीले भौतिक, संसारप्रतिको आफ्नो जटिलता स्वेच्छाले त्याग गर्दछौ, अनि प्रगति निश्चित हुन्छ। मायापुरमा हामी बीच भएको वार्तालापको टाइपिङ्ग कार्य भइरहेको छ र त्यसलाई पुस्तकको रूपमा छाप्ने मैले सोचिरहेको छु। त्यस पुस्तकको नाम "**पूर्ण प्रश्न पूर्ण उत्तर**" हुने छ। वितरणका लागि तयार हुनासाथ एकप्रति तिमीलाई पठाउने छु। लण्डनको रथयात्रा महोत्सवका लागि प्रस्थान गर्न अघि दुई तीन दिन न्यूयोर्कमा बस्ने छु। म कहिले न्यूयोर्क आइपुग्ने छु, त्यो मिति निश्चित छैन, तैपनि जुलाईको पहिलो सप्ताहतिर हुन्छ होला। मेरो न्यूयोर्क आगमनको मितिका लागि बालिमर्दन सँग नियमित सम्पर्कमा बस। तिमीलाई पुनः न्युयोर्कमा भेट्न पाउँदा म धेरै प्रसन्न भएको छु। तिमीसँग प्रश्न छन् भने हामी पुनः वार्तालाप गर्नेछौं।

यो पत्र प्राप्त गर्दाको समयमा तिमी स्वस्थ र सुखी अवस्थामा हुने छौ।

तिम्रो सदैव हितैषी

अभयचरणारविन्द भक्तिवेदान्त प्रभुपाद।

## ९

# भविष्यका लागि निर्णय

न्युयोर्क ४ जुलाई १९७२

**बब—** तपाईँको कृपापूर्ण पत्र एक हप्ताअघि प्राप्त गरेँ।

**श्रील प्रभुपाद—** तिमी धेरै बुद्‌धिमान् युवक हौ। यो दर्शन बुझ्ने प्रयास गर। यो धेरै महत्त्वपूर्ण छ। मानिसहरू इन्द्रियतृप्तिका लागि धेरै शक्ति नष्ट गरिरहेका छन्। अर्को जन्ममा के हुने हो, त्यसबारेमा तिनीहरू सावधान छैनन्। अर्को जन्म निश्चित छ, तर ती मूर्खहरू यसबाट अनभिज्ञ छन्। यो जन्म अर्को जन्मका लागि तयारी हो, त्यो कुरा तिनीहरूलाई थाहा छैन। आधुनिक शिक्षा र त्यस सम्बन्धका विश्वविद्यालयहरू यो साधारण ज्ञानप्रति पूर्णतया अन्धकारमा छन् वा अनभिज्ञ छन्। हामीहरूले प्रत्येक क्षण शरीर परिवर्तन गरिरहेका छौं। यो आयुर्वैज्ञानिक तथ्य हो। यो शरीर त्याग गरेपछि हामीले अर्को शरीर स्वीकार गर्नुपर्दछ। हामीले त्यो शरीर कसरी स्वीकार गर्न गइरहेका छौं? कस्तो शरीर? त्यो पनि जान्न सकिन्छ। उदाहरणका लागि कुनै व्यक्ति अध्ययन गर्दैछ भने उसले कहिले परीक्षा उत्तीर्ण गर्दछु र ऊ आफू चिकित्सक वा अभियन्ता कहिले बन्दछु भन्ने कुरा जानेको हुन्छ। त्यसरी नै तिमीले यस जीवनमा नै आफूले अर्को जीवन कस्तो पाउने हो त्यसको तयारी गर्न सक्दछौ।

**बारबरा—** (बबकी पत्नी) हामी अर्को जीवनमा के हुने हो, त्यसको निर्णय गर्न सक्दछौं?

**श्रील प्रभुपाद—** हो, सक्दछौं। तिमीले निर्णय गर्न सक्दछ्यौ। हामीले निर्णय गरेका छौं अर्को जन्ममा हामी भगवान् श्रीकृष्णकहाँ जान्छौं। भगवान्‌का धाम जाने हाम्रो निर्णय छ। अनुमान गरौं तिमीले अभियन्ता वा चिकित्सक हुने निर्णय गर्दछ्यौ। त्यस उद्देश्यअनुसार नै तिमीले आफूलाई शिक्षित बनाउने तयारी गर्दछ्यौ। त्यसरी नै अर्को जन्ममा

के हुने तिमीले निर्णय गर्नसक्दछौ। तर, यदि तिमीले निर्णय गरिनौ भने भौतिक प्रकृतिले निर्णय गर्नेछिन्।

**बारबरा—** के म पूर्वजन्ममा कृष्णभक्त थिएँ? मेरो पूर्वजन्ममा म कृष्ण भक्त थिएँ, त्यसैले अहिले पुनः यहाँ आएको हुँ, के यो सम्भव छ?

**श्रील प्रभुपाद—** यसले केही फरक पार्दैन। तर, अहिले तिमी कृष्णभक्त बन्न सक्दछौ। हाम्रो कृष्णभावनामृत आन्दोलनबाट लाभ लेऊ। जब पूर्ण कृष्णभक्त हुन्छ, ऊ फर्केर आउँदैन। तर, यदि सानो कमी भयो भने पुनः फर्केर आउने सम्भावना हुन्छ। तर, सानो कमी भएछ भने ऊ एउटा असल परिवारमा फर्केर आउँदछ। **शुचीनां श्रीमतां गेहे योगभ्रष्टोऽभिजायत।** असफल योगीले धार्मिक वा धनी परिवारमा जन्म लिन्छ। मानव बुद्धिले नै आफ्नो भविष्यको निर्णय गर्दछ, तर पशुले सक्दैन। हामीसँग भेदभाव छुट्ट्याउन सक्ने शक्ति छ— "यदि मैले यो कार्य गरेर म लाभान्वित हुन्छ त्यो कार्य गरेर लाभान्वित हुन्न।" मानव जीवनमा यस्तो शक्ति हुन्छ। त्यसैले तिमीले यसको सही उपयोग गर्नुपर्दछ। तिमीलाई तिम्रो जीवनको लक्ष्य थाहा हुनपर्दछ अनि सोही अनुसार निर्णय गर्नुपर्दछ। यो नै मानव सभ्यता हो।

**बारबरा—** के तपाईंले कहिले भगवान् श्रीकृष्णको दर्शन गर्नुभएको छ?

**श्रील प्रभुपाद—** हो, गरेको छु।

**बारबरा—** ए, तपाईंले?

**श्रील प्रभुपाद—** दिनहुँ, प्रत्येक क्षण गर्दछु।

**बारबरा—** यस भौतिक शरीरमा होइन?

**श्रील प्रभुपाद—** उहाँको भौतिक शरीर हुँदैन।

**बारबरा—** ए, मन्दिरमा भगवान् श्रीकृष्णको तस्बिर छ।

**श्रील प्रभुपाद—** त्यो भौतिक शरीर होइन। तिमीले भौतिकताले हेर्दछ्यौ किनभने तिमीसँग भौतिक आँखा छन्। तिमीसँग भौतिक आँखा छन् त्यसैले तिमीले आध्यात्मिक स्वरूप देख्न सक्दिनौ। त्यसकारण करूणावश भगवान् श्रीकृष्ण भौतिक शरीरमा प्रकट हुनुहुन्छ, जसले गर्दा तिमीले दर्शन गर्न सक्दछ्यौ। उहाँले करुणापूर्वक आफूलाई तिमीले दर्शन गर्न सक्ने

बनाउनुहुन्छ। त्यसको अर्थ, उहाँको भौतिक शरीर छ भन्ने होइन। अनुमान गरौं अमेरिकाका राष्ट्रपति करूणापूर्वक तिम्रो घरमा आए भने त्यसको अर्थ तिम्रो र उनको अवस्था समान भयो भन्ने हुँदैन। यो उनको करूणा हो। प्रेमले गर्दा तिम्रो घरमा आए भनेर तिम्रो अवस्थामा नै आई पुगे भन्ने हुँदैन। त्यसरी नै हामीले हाम्रा अहिलेका आँखाले भगवान् श्रीकृष्णको दर्शन गर्न सक्दैनौं। त्यसकारण भगवान् श्रीकृष्ण हाम्राअघि रंगिन तस्बिर, ढुङ्गा वा काठले निर्मित स्वरूपमा प्रकट हुनुहुन्छ। तर, भगवान् श्रीकृष्ण ती काठ र तस्बिरभन्दा भिन्न हुनुहुन्न किनभने प्रत्येक वस्तु भगवान् श्रीकृष्ण नै हुनुहुन्छ।

**बारबरा—** हाम्रो मृत्यु पश्चात् हाम्रो आत्मा के हुन्छ?

**श्रील प्रभुपाद—** तिमीले अर्को शरीर प्राप्त गर्दछ्यौ।

**बारबरा—** तुरुन्त?

**श्रील प्रभुपाद—** हो, तुरुन्त। जसरी तिमीले तिम्रो एपार्टमेन्ट परिवर्तन गर्दछ्यौ त्यस्तै हो। पहिला तिमीले अर्को एपार्टमेन्ट निश्चित गर्दछ्यौ अनि पहिलाको एपार्टमेन्ट छोड्दछौ र नयाँमा जान्छ्यौ।

**बारबरा—** के हामीले कस्तो शरीर पाउँदछौँ भन्ने जानकारी हुन्छ?

**श्रील प्रभुपाद—** हुन्छ, यदि तिमी योग्य छौ भने जुन व्यक्ति योग्य छ, उसलाई थाहा हुन्छ। तर, जसलाई थाहा छैन, उसको व्यवस्था प्रकृतिले गर्दछिन्। यदि तिमीलाई थाहा छैन भने त्यसको अर्थ तिमीले अर्को जीवनका लागि तयारी गरेकी छैनौ। मृत्युको समयमा तिम्रो विचार भावना कस्तो हुन्छ, त्यसले नै तिम्रो अर्को शरीर निर्धारण गर्दछ। प्रकृतिले त्यस्तो शरीर उपलब्ध गराउँदछिन्।

**बब—** यदि भगवान् श्रीकृष्णले सबै कुरा नियन्त्रण गर्नु हुन्छ भने भक्तलाई भगवान् श्रीकृष्णले कसरी नियन्त्रण गर्नुहुन्छ?

**श्रील प्रभुपाद—** मायाद्वारा। जसरी सरकारले देश नियन्त्रण गर्दछ, भगवान् श्रीकृष्णले त्यसरी नै नियन्त्रण गर्नुहुन्छ। एउटा राज्य, राजाका विभागले नियन्त्रण गर्दछन्।

**बब—** भगवान् श्रीकृष्णले भक्तलाई नियन्त्रण गर्नुहुन्छ?

**श्रील प्रभुपाद—** जसरी तिमीले तिम्री प्रेमीकालाई नियन्त्रण गर्दछौ। उदाहरणका लागि, यदि तिमीसँग प्रिय बच्चा छ भने तिमीले त्यसको नियन्त्रण उसकै लाभका लागि गर्दछौ। यदि उसले आगो छुन लाग्यो भने तिमीले तुरुन्त "होइन प्रिय छोरा, त्यसलाई नछोऊ" भन्दछौ। कृष्णभक्त वा भक्त कहिले गलत दिशा तर्फ उन्मुख हुँदैन किनभने भगवान् कृष्णले उसलाई सधैँ पथनिर्देश गर्नुहुन्छ, जबकि जुन व्यक्ति कृष्णभक्त छैन, ऊ मायाको नियन्त्रणमा हुन्छ र मायाले आवश्यक कार्य गर्दछिन्, जुन तिमीले पनि देखेका छौ।

**बब—** जब हाम्रो जन्म हुन्छ, के त्यहीसमय हाम्रो मृत्युको समय निश्चित गरिएको हुन्छ? जब मेरो जन्म भयो, के त्यहीसमय मेरो जीवनको अवधि निश्चित गरिएको हुन्छ?

**श्रील प्रभुपाद—** हो, निश्चित हुन्छ।

**एक भक्त—** के उसले त्यो परिवर्तन गर्न सक्दैन?

**श्रील प्रभुपाद—** हो, उसले परिवर्तन गर्न सक्दैन, तर भगवान् श्रीकृष्णले परिवर्तन गर्न सक्नुहुन्छ।

**भक्त—** यदि उसले आत्महत्या गऱ्यो भने के त्यो पनि निश्चित गरिएको हुन्छ?

**श्रील प्रभुपाद—** होइन, त्यो निश्चित गरिएको हुँदैन। त्यो तिमी आफैं गर्न सक्दछौ किनभने तिमीलाई केही स्वतन्त्रता प्रदान गरिएको हुन्छ। आत्महत्या गर्नु स्वाभाविक होइन, यो अस्वाभाविक हो। तर, हामीसँग केही स्वतन्त्रता छ। त्यसैले, हामी स्वाभाविकबाट अस्वाभाविकतर्फ जान सक्दछौ। कैदीहरू कारागारबाट स्वभावत बाहिर जान पाउँदैनन्। तर, यदि कसै गरेर पर्खालबाट हामफालेर भाग्न सफल भयो भने ऊ अरू बढी कारागार बस्नुपर्ने हुन्छ। ऊ पक्राउ पर्दछ र उसको कारागार बस्ने अवधि अरू थप हुन्छ। त्यसैले, स्वभावत: हामीले आफ्नो भाग्यको अतिक्रमण गर्न सक्दैनौं। तर, यदि त्यसो गऱ्यौं भने हामीले कष्ट भोग्नुपर्दछ। तर, यदि हामी कृष्णभक्तिमा छौं भने भगवान् श्रीकृष्णले हाम्रो भाग्यमा परिवर्तन गर्न

सक्नुहुन्छ। हामीले त्यसो गर्दैनौं तर भगवान् श्रीकृष्णले गर्नुहुन्छ। भगवान् श्रीकृष्ण भन्नुहुन्छ— **अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि** "तिम्रो रक्षा गर्ने छु।" मेरो रक्षाका लागि यस्तो परिवर्तन हुन्छ।व्यक्तिका दुई अवस्था छन्— भक्त र अभक्त। अभक्तहरू भौतिक प्रकृतिको नियन्त्रणमा हुन्छन् भने भक्तहरू भगवान् श्रीकृष्णको नियन्त्रणमा हुन्छन्। विशाल व्यापारिक प्रतिष्ठानहरू त्यसका प्रमुख व्यक्तिबाट नियन्त्रित विभिन्न विभागका परिवेक्षकद्वारा नियन्त्रित हुन्छन्। त्यही व्यक्तिले घर बाहिर अप्रत्यक्ष रूपले अन्य व्यक्तिद्वारा कार्य नियन्त्रण गर्दछ भने घरमा उसले आफ्नो सन्तानलाई प्रत्यक्षरूपले नियन्त्रण गर्दछ, तर ऊ सदैव नियन्त्रक नै हुन्छ।

त्यसरी नै, ईश्वर सधैँ नियन्त्रक नै हुनुहुन्छ। जब व्यक्ति भक्त बन्दछ, ऊ ईश्वरबाट नियन्त्रित हुन्छ, जब अभक्त हुन्छ, उसलाई ईश्वरकी प्रतिनिधि मायाले नियन्त्रण गर्दछिन्। तर, ऊ जुनसुकै अवस्थामा नियन्त्रित हुन्छ। उदाहरणका लागि अमेरिकाका प्रत्येक नागरिक सरकारको नियन्त्रणमा छन्। जब नागरिक ठिकसँग बस्दछ उसलाई नागरिक विभागले नियन्त्रण गर्दछ। यदि ऊ ठीकसँग बस्दैन भने उसलाई आपराधिक विभागले नियन्त्रण गर्दछ। तर, उसले "म नियन्त्रणमा छैन" भन्न सक्दैन, त्यो सम्भव पनि छैन। प्रत्येक व्यक्ति नियन्त्रणमा छन्। यदि कसैले "म नियन्त्रणमा छैन" भन्दछ भने त्यो पागल हो प्रत्येक व्यक्ति नियन्त्रणमा छ। यसरी तिमी कि सोझै मायाको नियन्त्रणमा छौ वा भगवान्को नियन्त्रणमा छौ वा उहाँका प्रतिनिधि मायाको नियन्त्रणमा छौ। मायाको नियन्त्रणमा तिमीले आफ्नो जीवन नष्ट गरिरहेका हुन्छौ। यसरी तिमी भौतिक अवस्थामा रहेर एक पछि अर्को जन्म लिएर शरीर परिवर्तन गरिरहन्छौ। तर, यदि तिमीले भगवान्बाट नियन्त्रित हुन रोज्दछौ भने तिमी भगवान्को धाममा फर्कन्छौ। यसरी तिम्रो जीवन सफल हुन्छ। नियन्त्रण विना तिमी बाँच्न सक्दैनौ त्यो सम्भव नै छैन। भगवान् श्रीकृष्णबाट नियन्त्रित हुनु नै बुद्धिमानी हो। यो कुरा भगवद्गीतामा उल्लेख छ— बहूनां जन्मनामन्मां ज्ञानवान्मां प्रपद्यते। "धेरैधेरै जन्मपश्चात् व्यक्ति मेरो शरणमा पर्दछ। (७.१९) वासुदेवः सर्वमितिः। भगवान् श्रीकृष्ण

हजुर सबै हुनुहुन्छ। म हजुरकहाँ आएको छु, मलाई स्वीकार गर्नुहोस्। म हजुरको पूर्ण शरणमा आएको छु मलाई नियन्त्रण गर्नुहोस्। म हजुरको नियन्त्रणमा छु। म लामो समयसम्म दुष्टहरूबाट नियन्त्रित भएँ। त्यसबाट केही लाभ भएन। म मेरा इन्द्रियहरूबाट नियन्त्रित भए। इन्द्रियहरूको नियन्त्रणमा मैले तथाकथित परिवार, समाज, देश, कुकुरसम्मको सेवा गरेँ। तर कसैले पनि मलाई सन्तुष्टि दिएनन्। त्यसैले, अब मलाई चेतना भयो त्यसैले आफूलाई हजुरको नियन्त्रणमा राखेको छु। कुकुरबाट नियन्त्रित हुनु भन्दा ईश्वरको नियन्त्रणमा रहन्छु।" यो नै कृष्ण चेतना वा कृष्णभक्ति हो। कुकुरले नियन्त्रण गरिएका मानिसलाई तिमीले देखेका छैनौ ? बाटोमा कुकुर रोकिन्छ, दिशा गर्दछ। उसको स्वामी पनि उभिन्छ र पर्खिन्छ। त्यस्तै हुन्छ होइन ? कुकुरले दिशा पिशाव गर्दछ तर स्वामीले "म स्वामी हुँ" भन्ने सोच्दछ। तर, ऊ त्यसबाट नियन्त्रित छ। यो नै माया हो।" ऊ कुकुरको सेवक भइरहेको छ तैपनि ऊ सोच्दछ "म स्वामी हुँ"। जबसम्म व्यक्ति कृष्णचेतनाले युक्त हुँदैन उसले यो बुझ्न सक्दैन। त्यो दुष्ट आफ्नो कुकुरबाट नियन्त्रित छ भन्ने कुरा हामी बुझ्न सक्दछौं तर ऊ भने आफू स्वामी हुँ भन्ने सोचिरहन्छ। त्यो कुरा हामी बुझ्दछौं। तिम्रो के विचार छ? के ऊ कुकुरबाट नियन्त्रित भएको छैन ?

**बब—** हो, त्यस्तै हो।

**श्रील प्रभुपाद—** तर, उसले सोच्दछ "म कुकुरको स्वामी हुँ"। गृहस्थ व्यक्ति आफ्ना पत्नी, सन्तान, सेवक, प्रत्येकबाट नियन्त्रित हुन्छ, तर ऊ भने "म स्वामी हुँ" भन्ने सोच्दछ। राष्ट्रपति निक्सनले सोच्दछन् म देशको स्वामी हुँ, तर उनी पनि नियन्त्रित छन्। उनी कुनै पनि समय जनता, जो उनका सेवक हुन् तिनीहरूबाट निष्काशित हुन सक्दछन्, अनि उसको अवस्था यस्तो हुन्छ। उसले "म तिमीलाई राम्रो सेवा दिन्छु र प्रथम श्रेणीको सेवक बन्दछु भनेर दावी गर्नुपर्दछ।" ठीकै छ तिमी राष्ट्रपति बन" भन्दै जनताले उनलाई भोट दिन्छन्। अनि उनी प्रचार गर्दै भन्दछन् "पुनः मलाई जिताऊ, पुनः मलाई जिताउ।" त्यसको अर्थ तिनी सेवक हुन्।

तैपनि उनी सोच्दछन् "म स्वामी हुँ"। मायाको अवस्था यस्तै हुन्छ। जुन व्यक्ति मायाद्वारा नियन्त्रित हुन्छ उसले आफूलाई स्वामी सोच्दछ। माया र सत्यतामा यही भिन्नता छ। कम्तीमा उसले "म कहिल्यै पनि स्वामी होइन म सधैँ सेवक हुँ" भन्ने कुरा जानेको हुन्छ। यदि सेवकले "म स्वामी हुँ" भन्ने सोच्दछ भने त्यसलाई भ्रम भनिन्छ। तर, जब सेवकले "म सेवक हुँ" भन्ने सोच्दछ भने त्यो भ्रम होइन त्यो मुक्ति हो। किनभने, ऊ कुनै झुटो विचारले नियन्त्रित भएको हुँदैन। विषय वस्तु बुझ्ने प्रयास गर। भक्तहरू कुनै पनि झुटो अवधारणाले कहिल्यै नियन्त्रित हुँदैनन्। उनीहरूलाई आफ्नो अवस्थाका बारेमा जानकारी हुन्छ- **स्वरूपेण व्यवस्थितिः।** मुक्तिको अर्थ व्यक्ति आफ्नो वैधानिक अवस्थामा स्थित हुनु हो। त्यो भनेको 'म सेवक हुँ' भन्ने हुन्छ। यदि मलाई 'म सेवक हुँ' भन्ने जानकारी भयो भने त्यो नै मेरो मुक्ति हो। तर, यदि मैले म स्वामी हुँ भन्ने सोचेँ भने त्यो मेरा लागि बन्धन हो। बद्धजीव र मुक्तजीवको भिन्नता यही हो। यी कृष्णभावनामृतका भक्तहरूले सधैँ आफूलाई भगवान् श्रीकृष्णको सेवक हौं भन्ने सोच्दछन्। त्यसकारण तिनीहरू सबै मुक्त जीव हुन्। तिनीहरू मुक्तिका लागि प्रयास गर्दैनन्, तिनीहरू पहिला नै मुक्त भइसकेका छन् किनभने तिनीहरू आफ्नो वैधानिक अवस्थामा स्थित छन्। तिनीहरू कृत्रिम तरिकाले 'म स्वामी हुँ' भन्ने सोच्दैनन्। अन्यथा अन्य सबैले "म स्वामी हुँ" भन्ने सोच्दछन्, त्यो भ्रम हो। तिमी जीवनको कुनै पनि समयमा स्वामी हुन सक्दैनौं तिमी सेवक भएर बस्नुपर्दछ। त्यो नै तिम्रो अवस्था हो। जब उसले कृत्रिम तरिकाले स्वामी हुँ भन्ने सोच्दछ त्यो उसको बद्धजीवन हो। जब व्यक्ति स्वेच्छाले परमस्वामीको शरणमा पर्दछ त्यो नै उसको मुक्ति हो। भक्तले छुट्टै मुक्तिका लागि प्रयास गर्दैन। जब ऊ भगवान् श्रीकृष्ण वा भगवान् श्रीकृष्णका प्रतिनिधिको शरणमा पर्दछ, ऊ तुरुन्त मुक्त हुन्छ।

**बब—** प्रभुपाद ! केही धार्मिक व्यक्तिहरूले जिससले उनीहरूलाई निर्देश गर्नुहुन्छ भनेर दाबी गर्दछन्। के त्यसो हनु सक्दछ ?

**श्रील प्रभुपाद—** हुन्छ, तर तिनीहरूले त्यो निर्देशको पालना गरेका

छैनन्। जसरी क्रिस्चियनलाई निर्देश गर्दै जिससले भन्नुभएको छ :— "तिमीहरू हत्या नगर।" तर तिनीहरूले हत्या गरिरहेका छन्। जिससको निर्देश खोई कता गयो? केवल "मलाई जिसस क्राइस्टले निर्देश गर्नुहुन्छ" भनेर के हुन्छ? तर म उहाँको शब्दलाई वास्ता नै गर्दिनँ "के यही निर्देश हो?" कोही पनि जिसस क्राइस्टबाट निर्देशित छैनन्। तिनीहरूको दाबी झुटो हो। वास्तवमा जिसस क्राइस्टबाट निर्देशित व्यक्ति पाउन धेरै कठिन छ। जिसस क्राइस्टका निर्देशहरू छन्, तर कसैले पनि त्यसलाई वास्ता गरेका छैनन्। तिनीहरूले जिसस क्राइस्टलाई आफ्ना पाप स्वीकार गर्ने ठेकेदार बनाएका छन्। तिनीहरूको दर्शन नै यही हो। तिनीहरूले सबै प्रकारका पाप गर्दछन् र त्यसको जिम्मेवारी जिसस क्रइस्टले लिनुहुन्छ। तिनीहरूको धर्म त्यस्तै छ। त्यसकारण तिनीहरू भन्दछन्— "हामीसँग राम्रो धर्म छ हाम्रा सबै प्रकारका पापमय क्रियाकलापका लागि जिसस क्राइस्ट मर्नुहुन्छ।" के यो नै राम्रो धर्म हो? जिसस क्राइस्ट प्रति तिनीहरूको सहानुभूति नै छैन। उहाँ हाम्रा पापका लागि मर्नुभयो। त्यसैले, हामी जिसस क्राइस्टबाट निर्देशित हुन पर्दछ भन्ने पनि सोच्दैनन्। यदि अन्यथा सोच्दैनौं भने उनीहरू अहो! हामीहरू पापकर्म गर्दै गरौं जिससक्राइस्टले हाम्रा पापलाई निष्फल गर्ने ठेक्का लिनुहुन्छ। म केवल चर्च जान्छु र पाप कर्म स्वीकार गर्दछु अनि फर्केर आएर पुनः मूर्खतापूर्ण कार्य गरिरहन्छु भन्दछन्। के यो धेरै राम्रो बुद्धिमत्ता पूर्ण कुरा हो भन्ने तिमी सोच्दछौ?

**बब**— होइन?

**श्रील प्रभुपाद**— जुन व्यक्ति वास्तवमा जिसस क्राइस्टबाट निर्देशित छ उसले निश्चितरूपमा मुक्ति प्राप्त गर्दछ। तर, जिसस क्राइस्टबाट वास्तवमा निर्देशित व्यक्ति पाउन धेरै कठिन छ।

**बब**— कहिलेकाहीँ बाइबल पढ्ने जिसस तरङ्गले युक्त युवाहरू कस्ता हुन्?

**श्रील प्रभुपाद**— बाइबलको आदेश विपरीत हो। यदि बाइबलको

पालना गर्दछन् भने तिनीहरूले कसरी हत्या गर्न सक्दछन् ?

**बब**— जिससले मासु खानुहुन्थ्यो भनेर बाइबलले भन्दछन् भनेर तिनीहरू दाबी गर्दछन्।

**श्रील प्रभुपाद**— त्यो ठीकै छ। उहाँ जे पनि खान सक्नुहुन्छ, उहाँ शक्तिशाली हुनुहुन्थ्यो। तर, उहाँले आदेश दिनुभएको छ- "तिमीहरू हत्या नगर।" तिमीले हत्या रोक्नुपर्दछ।" हो शक्तिशाली हुनुहुन्थ्यो। उहाँले सम्पूर्ण विश्व खान सक्नुहुन्थ्यो। तर, तिमीले आफूलाई जिसस क्राइस्टसँग तुलना गर्नुहुँदैन। तिमीले जिसस क्राइस्टको नक्कल गर्नुहुँदैन तिमीले उहाँका आदेशको पालना गर्नुपर्दछ। अनि मात्र तिमी जिसस क्राइस्टद्वारा निर्देशित हुन्छौ। त्यो नै वास्तवमा आज्ञाकारिता हो। यो कुरा भागवतमा उल्लेख छ। जो ईश्वर हुनुहुन्छ, जो शक्तिशाली हुनुहन्छ उहाँले जे पनि गर्न सक्नुहुन्छ, तर हामीले त्यसको नक्कल गर्नुहुँदैन। हामीले उहाँका आदेशको पालना गर्नुपर्दछ। उहाँले मलाई जे भन्नुभयो म त्यो गर्दछु।" तिमीले नक्कल गर्न सक्दैनौ। जिसस क्रइस्टले मासु खानुभयो भनेर तिमीले भन्यौं। त्यसलाई स्वीकार गर्दै भनौं— कुनै अवस्थामा मासु खाएर अरूलाई हत्या नगर भन्नेजस्ता आफैंमा विरोधाभास हुने कुरा जिसस क्राइस्टले गर्नुभयो होला भन्ने तिमी सोच्दछौं।

**बब**— सोच्दिनँ।

**श्रील प्रभुपाद**— उहाँले त्यसो गर्न सक्नुहुन्न। उहाँले त्यसो गर्नुहुन्न भन्नु नै सही श्रद्धा र विश्वास हो। उहाँले मासु किन खानुभयो ? उहाँलाई थाहा होला तर उहाँले मलाई 'अरूलाई नमार' भन्नु भएको छ। त्यसैले, मैले त्यो पालना गर्नपर्दछ। यो नै सही पद्धति हो। तिमी जिसस क्राइस्ट होइनौ, त्यसैले उहाँको नक्कल गर्न सक्दैनौ। उहाँले भगवान्का लागि आफ्नो जीवन उत्सर्ग गर्नुभयो। के तिमी गर्न सक्दछौ ? त्यसैले तिमीले जिसस क्राइस्टको नक्कल किन गर्ने ? तिमीले मासु खाँदै जिसस क्राइस्टको नक्कल गरिरहेका छौ। त्यसो हो भने उहाँको नक्कल गर्दै इश्वर चेतनाको प्रचार गर्न आफ्नो जीवन किन उत्सर्ग गर्दैनौ ? तिम्रो के विचार छ ? जब

तिमी प्रचार गर्दछौ तिमीले तिम्रो के विचार छ भन्न सक्दछौ। तिनीहरू तथाकथित क्रिस्चियन हुन्, तिनीहरू भगवान्‌का लागि के गर्दैछन्? सूर्यलाई हेर त ! सूर्यले पिशाब पनि सोस्दछन्। के तिमी पिशाब पिउन सक्दछौ? तिमी सूर्यको नक्कल गर्न चाहन्छौ "अहो ! सूर्यले पिशाब सोस्दछ, म पनि पिशाब पिउँदछु के यसो गर्न सक्दछौ? जिसस क्राइस्ट शक्तिशाली हुनुहुन्थ्यो, उहाँले जे पनि गर्न सक्नुहुन्थ्यो तर हामीले त्यसको नक्कल गर्न सक्दैनौं, हामीले केवल उहाँका आदेशको पालना गर्नुपर्दछ। त्यो नै सही क्रिस्चियनवाद हो। हामीले शक्तिशाली व्यक्तिको नक्कल गर्न सक्दैनौं।

हाम्रो वैदिक साहित्यमा वर्णन छ :— एकपटक एउटा विषको ठूलो सागर थियो। त्यो के गर्ने भनेर कसैलाई जानकारी थिएन। भगवान् शिवले भन्नुभयो— "ठीकै छ, म पिइदिन्छु" अनि उहाँले त्यो विषको सागर पिउनुभयो र आफ्नो घाँटीमा राख्नुभयो। के तिमी पनि विष पिउन सक्दछौ? सागर होइन, एक गिलास? हामीले कसरी भगवान् शिवको नक्कल गर्न सक्दछौं? भगवान् शिवले हामीलाई विष पिउने सल्लाह कहिल्यै दिनुभएन। हामीले सल्लाहको पालना गर्ने हो, नक्कल गर्ने होइन। एल एस डी र गाँजा पिउनेहरू भन्दछन् भगवान् शिव पनि गाँजा पिउनुहुन्छ तर भगवान् शिवले विषको सागर पिउनुभयो के तिमी पिउन सक्दछौ?

भगवान् शिवका उपदेशहरू पालना गर्ने हो उहाँले गाँजा पिउनु भएकोलाई उदाहरण मान्ने होइन। पार्वतीले उहाँलाई पूजाउपासना गर्ने सर्वोत्तम पद्धति कुन हो भनेर जिज्ञासा राख्दा उहाँले - **विष्णोराराधनं परम्** अर्थात्— "भगवान् श्रीविष्णु कृष्णको पूजासेवा गर्नु नै सर्वोत्तम हो" भन्नुभयो। धेरै देवीदेवता छन्, तर भगवान् विष्णुको पूजासेवा नै सर्वोत्तम हो भनेर सिफारिस गरिएको छ। भगवान् श्रीविष्णुको सेवा गर्नुभन्दा वैष्णवको सेवा गर्नु अझ उत्तम हो। यहाँ प्रयोग गरिएको सही शब्द— **तदीयानाम्** अर्थात् "तिनीहरू, जो भगवान् श्रीविष्णुसँग सम्बन्धित छन्"

हुन्छ। उदाहरणका लागि हामीले यो बिरुवा तुलसीको पूजा गर्दछौं। हामीले अन्य सबै विरुवाको पूजा गर्दैनौं किनभने यी तुलसीको भगवान् श्रीकृष्णसँग घनिष्ठ सम्बन्ध छ। त्यसैले हामी यिनको पूजा गर्दछौं। त्यसरी नै, जुनसुकै वस्तुको भगवान् श्रीकृष्णसँग घनिष्ठ सम्बन्ध छ भने भगवान् विष्णुको पूजा गर्नुभन्दा तिनको पूजा गर्नु राम्रो हुन्छ।

**बब—** त्यो के हो ?

**श्रील प्रभुपाद—** किनभने त्यसो गरेर भगवान् श्रीकृष्ण प्रसन्न हुनुहुन्छ। अनुमान गरौं, तिमीसँग कुकुर छ र तिम्रा केही साथी आएर कुकुरलाई थपथपाउँदछन् (श्रील प्रभुपादले थपथपाएको जस्तो गर्नुहुन्छ) त्यसो गरेकोका तिमी प्रसन्न हुन्छौ। "अहो ! ऊ मेरो असल मित्र हो।" अनि, उनीहरूले कस्तो सोच्दछन्? हेर त ! केही साथी आएर "मित्र ! तिमीसँग कति राम्रो कुकुर रहेछ" भन्दछन् (सबै हाँस्दछन्) (केही भारतीय पाउना कोठामा प्रवेश गर्दछन्)

**श्रील प्रभुपाद—** केही प्रसाद लिनुहोस् (श्रील प्रभुपाद आफ्ना पाहुनाहरूसँग कहिले हिन्दीमा कहिले अङ्ग्रेजीमा बोलिरहनुहुन्छ) त्यो उहाँको न्यूयोर्क बसाइको अन्तिम दिन थियो। केही घण्टा पछि लण्डन जानका लागि हवाइजहाजको समय निर्धारित थियो। बबले श्रील प्रभुपादलाई केनेडी हवाई अड्डा लैजान एउटा कार लिएर आए। भक्तहरू श्रील प्रभुपादको सामान ल्याएर कारमा राख्दै थिए। कोही उहाँका भर्खर समाप्त गरिएका अनुवादका पाण्डुलिपि राख्दै थिए र अन्तिम समयको व्यवस्थापन गर्दै थिए।

**श्याम सुन्दर—** सबै कुरा व्यवस्थित भयो, श्रील प्रभुपाद। कारले हामीलाई पर्खि रहेको छ।

**श्रील प्रभुपाद—** त्यसो हो भने? अब हामी जान सक्दछौं? सबै ठिक छ। हरे कृष्ण !

# निष्कर्षका शब्दहरू

१९७२ देखि १९७६ सम्म मैले श्रील प्रभुपादका सुझावहरूलाई हृदयङ्गम गर्दै भगवद्गीता र भक्तियोगको गम्भीरतापूर्वक अध्ययन गरेँ। उहाँले मलाई विभिन्न दृष्टिकोणबाट निरन्तर प्रश्न सोध्ने सुझाव दिनुभएको थियो। साथै, भक्तिमार्गका बारेमा अरूसँग नि सल्लाह लिन भन्नुभएको थियो। यद्यपि, म उहाँका भक्तहरूमा भएको भक्तिमय रस आस्वादन गर्न उत्सुक थिएँ, साथै, म भक्तियोगको सावधानीपूर्वक विस्तृतरूपमा अध्ययन गर्न पनि दृढसंकल्परत थिएँ।

म वैज्ञानिक भएकाले सर्वप्रथम मैले गीताको भौतिक ज्ञान शास्त्र अन्वेषण गरेँ। भक्तियोगको विज्ञानमा दिव्य विषयहरू बुझ्ने बारेमा आफ्नै माध्यम र पद्धतिहरू छन्। भगवान् श्रीकृष्णका बारेमा श्रवण गर्ने र ध्यानयुक्त जप कीर्तन गर्ने जस्ता माध्यमको अनुभव गर्नका लागि मैले मलाई पलायनवादबाट मुक्त गर्नुपर्दछ भन्ने महसुस गरेँ। श्रील प्रभुपादले मलाई आवश्यक पहिलो पाइला चाल्नका लागि विश्वस्त गराइदिनुभयो। सधैँ मेरो अनपेक्ष सुमधुर अनुभवले पनि अरू अघि बढ्न विश्वस्त गरायो।

श्रील प्रभुपादसँगको पहिलो भेट पश्चात् १९ जुलाई १९७६ मा उहाँले म र मेरी पत्नीलाई शिष्यरूपमा स्वीकार गर्नुभयो। पुरातन वैष्णव परम्परामा समाहित गर्दै दीक्षा दिएर मलाई ब्रह्मतीर्थ दास र पत्नीलाई भक्तिदेवी दासी नामकरण गर्दै आध्यात्मिक पथमा गम्भीर भएर अघि बढेको साधक हो भन्ने संकेत गराइदिनुभयो।

मेरो भगवान् श्रीकृष्ण प्रतिको यात्रा जुन १९७२ मा सुरुभएको थियो। त्यससमय देखि मैले मेरो आन्तरिक जीवन र मेरो बाहिरी जिम्मेवारीमा समञ्जस्य गर्ने सधैँ प्रयास गर्दथेँ। मेरी पत्नीको प्रेमपूर्ण सहयोग र धेरै विज्ञ अभ्यासकर्ताको निरीक्षणले मलाई गीताको सिद्धान्तमा मग्न हुन सहयोग गऱ्यो।

योगको सिद्धान्त, जसले हाम्रो भित्री शब्दलाई सर्वोच्च शब्द, जसलाई संस्कृतिमा परमात्मा भनिन्छ, जोड्न र पप संस्कृतिमा "त्यो शक्ति" जसले अन्तर्ज्ञान शक्ति निर्माण गर्दछ, त्यसले, मेरो जीवनमा वास्तविक शक्ति प्रदान गऱ्यो। त्यो अन्तर्ज्ञानको जड वा सम्बन्ध कसरी निर्माण गर्न सकिन्छ? दर्शनलाई बुझेर, जपकीर्तन गरेर र गीताको अर्न्तज्ञान जाँच्ने पद्धतिलाई विश्वस्त बाहिरी शक्तिमा प्रयोग गरेर निर्माण गर्न सकिन्छ।

वैज्ञानिक जीवनमा प्रगति गर्न र विशेषज्ञको रूपमा अघि बढ्न मैले श्रील प्रभुपादद्वारा स्थापित अन्तर्राष्ट्रिय कृष्णभावनामृत सङ्घको भक्तियोग अभ्यासमा म सदैव सहभागी भइरहेँ। सङ्घमा मेरो सेवाअन्तर्गत शिशु विद्यालयको नेतृत्व, पुस्तक प्रकाशन र भक्तियोगको सिद्धान्तको अध्ययन प्रतिष्ठानको अभिवृद्धि हुने गर्दथ्यो। यस्तो अवसरले मलाई भक्तियोगप्रतिको मेरो अवधारणा र अनुभूति अरू गहिरियो र अरू फष्टायो किनभने श्रील प्रभुपादले तीस वर्ष अघि मेरो प्रश्नको पूर्णताले युक्त उत्तर दिएपछि मेरा अनुभूति निरन्तर बढ्दै गए।

ब्रह्मतीर्थ दास (बब कोहेन)

गेन्सभिल्ला, फ्लोरिडा

२४ जुन २००५

# लेखक परिचय

कृष्णकृपामूर्ति अभयचरणाविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद १८९६ मा यस पृथ्वीको कलकत्तामा प्रकट हुनुभयो। उहाँले आफ्ना आध्यात्मिक गुरु श्रील भक्तिसिद्धान्त सरस्वती गोस्वामीसंग १९२२मा कलकत्तामा भेट गर्नुभयो। त्यससमयमा अत्यन्त विद्वान् र भक्त श्रील भक्तिसिद्धान्तले गौडिय मठको स्थापना गर्नुभयो। उहाँले यी शिक्षित युवालाई मन पराउनुभयो र वैदिक ज्ञानको शिक्षा प्रदान गर्न आफ्नो जीवन उत्सर्ग गर्न प्रेरित गर्नुभयो। श्रील प्रभुपाद उहाँको विद्यार्थी बन्नुभयो र एघार वर्ष पछि १९३३ मा इलाहवादमा विधिवत् दीक्षित शिष्य बन्नुभयो।

१९२२ को पहिलो भेटमा नै श्रील भक्तिसिद्धान्त सरस्वती ठाकुरले श्रील प्रभुपादलाई वैदिक ज्ञानलाई अङ्ग्रेजी भाषामा प्रचारप्रसार गर्न आग्रह गर्नुभएको थियो। त्यसको केही वर्षपछि श्रील प्रभुपादले वैदिक ग्रन्थको अति महत्त्वपूर्ण भगवद्गीतामा टिप्पणी वा तात्पर्य लेख्नुभयो। साथै गौडिय मठको कार्यलाई पनि सहयोग गर्न सुरु गर्नुभयो। १९४४ मा आफू एक्लैले "व्याक टु गडहेड" नाम गरेको पाक्षिक पत्रीका अङ्ग्रेजीमा प्रकाशित गर्न सुरु गर्नुभयो। उहाँ आफैंले पाण्डुलिपी तयार गर्ने, शुद्धाशुद्धी जाँच गर्ने र प्रकाशित प्रति निशुल्क वितरण गर्दै बडो सङ्घर्ष गर्दै प्रकाशनलाई निरन्तरता दिनुभयो।

१९४७ मा श्रील प्रभुपादको दार्शनिक विद्वत्ता र भक्ति देखेर गौडिय वैष्णव समाजले उहाँलाई "भक्तिवेदान्त" को पदले अलंकृत गऱ्यो। १९५० मा चौवन्न वर्षको उमेरमा श्रील प्रभुपादले पारिवारीक जीवनबाट निवृत्ति लिनुभयो। त्यसको चार वर्षपछि वानप्रस्थ आश्रममा प्रवेस गरेर आफ्नो समय अध्ययन र लेखन कार्यमा प्रयोग गर्नका लागि पवित्र सहर वृन्दावन जानुभयो। त्यहाँ उहाँ ऐतिहासिक श्रीश्रीराधादामोदर मन्दिरको सानो कोठामा बसेर गहन अध्ययन र लेखन कार्य गर्दै धेरै वर्ष

बिताउनुभयो। १९५९ मा उहाँले संन्यास लिनुभयो। त्यस श्रीश्रीराधादामोदर मन्दिरमा बसेर श्रील प्रभुपादले "इजी जर्नी टु अदर प्लानेट" र वैदिक साहित्यको सार वा मख्खनरूपी अठार हजार श्लोक भएको धेरै खण्डको श्रीमद्भागवतको अनुवाद, तात्पर्य लेख्न प्रारम्भ गर्नुभयो। जुन उहाँको जीवनको श्रेष्ठ कृति नै हो। श्रीमद्भागवतको तीन खण्ड प्रकाशन गरेपछि १९६५ मा आफ्ना गुरुको उद्देश्य पूर्ण गर्न अमेरिका आउनुभयो। त्यसपछि उहाँले भारतको दार्शनिक र धार्मिक विषयमा असीवटा जति आधिकारीक अनुवाद, तात्पर्य र विश्लेषक अध्ययनरूपी पुस्तक लेख्नुभयो। जब श्रील प्रभुपाद पानीजहाजबाट न्युयोर्क सहर आउनुभयो त्यस समय उहाँ व्यावहारिक रूपले अर्थ धन रहित हुनुहुन्थ्यो। तर एक वर्षसम्मको यस्तो दुःखपूर्ण अवस्था पछि १९६६ मा उहाँले "अन्तर्राष्ट्रिय कृष्णभावनामृत सङ्घ" को स्थापना गर्नुभयो। १४ नोभेम्बर १९७७ मा दुःखमय अप्रकट हुनु अघि उहाँले सय भन्दा बढि आश्रम, पाठशाला, मन्दिर, प्रतिष्ठान र कृषि उद्यमस्थलको नेतृत्त्व लिएर त्यसलाई पथप्रदर्शन गर्दै संसारभर विकसित भएको हेर्नुभयो।

१९६८ मा श्रील प्रभुपादले पश्चिम भर्जिनियाको पहाडमा वैदिक समाजरूपी नयाँ वृन्दावन स्थापना गर्नुभयो। यस वैदिक समाजको सफलताबाट प्रेरित भएर उहाँका शिष्यहरूले अमेरिका र अन्य देशमा यस्ता समाजहरूको निर्माण गरे।

१९७५ मा श्रील प्रभुपादको कल्पना अनुसारको वृन्दावनमा अत्यन्त सुन्दर "कृष्णबलरामको मन्दिर" र अन्तर्राष्ट्रिय स्तरको अतिथिगृहको निर्माण प्रारम्भ भयो। १९७८ मा जुहु, बम्बईमा चार एकड जमिनमा मन्दिर, आधुनिक रङ्गमंच, अतिथिगृह र शाकाहारी भोजनालय मिश्रित सांस्कृतिक स्थलको निर्माण प्रारम्भ गर्नुभयो। पचास हजार भक्त निवास गर्ने मायापुर, पश्चिम वङ्गालमा महत्त्वाकाङ्क्षी परियोजना श्रील प्रभुपादको हुनसक्दछ र पाँच हजार वर्ष अघिको वैदिक

जीवनको सानो नमुनाकोरूपमा श्रीधाम मायापुरमा सम्पूर्ण विश्वको अघि उपस्थित हुनेछ।

श्रील प्रभुपादले वैदिक पद्धितको प्रारम्भिक र उच्चस्तरको शिक्षा पश्चिम जगत्लाई प्रदान गर्नुभयो। १९७२ मा गुरुकुल स्थापना गरिएको हो तैपनि अहिले सयौं विद्यार्थी र धेरै शाखा संसारभरी खुलेका छन्।

श्रील प्रभुपादको सबैभन्दा सार्थक र महत्त्वपूर्ण योगदान भनेको निश्चय नै उहाँका पुस्तकहरू नै हुन्। बौद्धिक समाजले यी पुस्तकहरूलाई यिनको आधिकारीता, गहिराइ र स्पष्टताका लागि सम्मान गर्दछन्। त्यसैले, यी पुस्तकहरू धेरै महाविद्यालयहरूमा विषयगत पाठ्यपुस्तकको रूपमा अध्ययन गराइन्छ। अर्को थप कुरा श्रील प्रभुपादका पुस्तकहरू विष्वका अन्य पच्चीस भाषामा अनुवाद गरिएको छन्। १९७२ मा स्थापना गरिएको "भक्ति वेदान्त बुक ट्रष्ट" को प्राम्भिक कार्य भनेको श्रील प्रभुपादका पुस्तकहरूको प्रकाशन गर्नु हो। त्यसैले, अहिले यो प्रकाशन संस्था भारतीय धर्म र दर्शन सम्बन्धी पुस्तक प्रकाशन गर्ने संसारको सबैभन्दा विशाल संस्था भएको छ। वर्तमानमा यस संस्थाको योजना भनेको सत्र खण्डमा रहेको बंगाली चैतन्य-चरितामृतको अनुवाद र तात्पर्य प्रकाशन गर्नु रहेको छ। श्रील प्रभुपादले केवल अठार महिनामा त्यो कार्य पूरा गर्नु भएको थियो। आफ्नो वृद्ध अवस्था भएपनि श्रील प्रभुपादले बाह्र वर्षमा छ महाद्वीपको चौध पटकसम्म प्रवचन भ्रमण गर्नु भएको थियो। यस्तो व्यस्त कार्यक्रम भएपनि श्रील प्रभुपादले आफ्नो लेखन कार्य जारी राख्नुभयो। उहाँका लेखन वैदिक दर्शन, धर्म र संस्कृतिको पुस्तकालय नै हो।

श्रील प्रभुपादसँगको निरन्तर र क्रमशः भेटले भारतमा कार्यरत पिसकोरको जीवनमा परिवर्तन भयो। १९७२ पिसकोरमा शिक्षकको रूपमा कार्यरत बब कोहेन आध्यात्मिक प्रबुद्धताका खोजीमा लाग्दै भारत आइपुगे। यो श्रीकृष्ण चैतन्यको जन्मस्थल, भारत मायापुर गाउँमा श्रील प्रभुपादसँग भएको उनको भेटपछि उनको जीवनमा भएको परिवर्तनको प्रतिलेख हो।